# श्री महर्ष्यात्रि प्रणीता

# ॥ अत्रि-संहिता ॥

## (धर्मशास्त्र सम्बन्धी एक महत्वपूर्ण स्मृतिग्रन्थ)

सङ्कलन तथा नेपालीमा भावानुवाद : मोहन प्रसाद सापकोटा
(sapkotamps731@gmail.com)

**॥ श्री गणेशाय नमः ॥**

**ॐ**

**श्री महर्ष्यात्रि प्रणीता**

**॥ अत्रि-संहिता ॥**

**हुताग्निहोत्रमासीनमत्रिं वेदविदां वरम् ।**
**सर्वशास्त्रविधिज्ञं तमृषिभिश्च नमस्कृतम् ॥१॥**
**नमस्कृत्य च ते सर्व इदं वचनमब्रूवन् ।**
**हितार्थं सर्वलोकानां भगवन्! कथयस्व नः ॥२॥**

अग्निहोत्री, वेद जान्नेहरूमा उत्तम, सबै शास्त्रका विधि जान्ने एवं ऋषिहरूबाट नमस्कृत भई बसिरहेका अत्रि ऋषिलाई सबै ऋषिहरू नमस्कार गरेर भन्दछन् कि- हे भगवान्! सारा संसारको हितका खातिर हामीलाई हजुर उपदेश दिनु हवस् ।

**अत्रिरुवाच ॥ अत्रि भन्नु हुन्छ ।**

**वेदशास्त्रार्थतत्त्वज्ञा यन्मे पृच्छथ संशयम् ।**
**तत्सर्वं संप्रवक्ष्यामि यथादृष्टं यथाश्रुतम् ॥३॥**

हे वेदको तत्व जान्ने भएका मुनिहरू हो ! जुन प्रश्न हजुरहरूले सोध्नु भयो म त्यसको उत्तर देखेसुनेसम्म दिनेछु ।

**सर्वतीर्थान्युपस्पृश्य सर्वान्देवान्प्रणम्य च ।**
**जप्त्वा तु सर्वसूक्तानि सर्वशास्त्रानुसारतः ॥४॥**
**सर्वपापहरं दिव्यं सर्वसंशयनाशनम् ।**
**चतुर्णामपि वर्णानामत्रिः शास्त्रमकल्पयत् ॥५॥**

सबै तीर्थमा आचमन गरी, सबै देवतालाई नमस्कार गरी, सबै सूक्त जपी, सबै शास्त्र अनुसार सबै पाप हरण गर्ने, उत्तम, सबै शङ्का हटाउने र चारै वर्णका लागि लाभकारी (यो) शास्त्रलाई अत्रि ऋषिले रचना गर्नु भयो ।

**ये च पापकृतो लोके ये चान्ये धर्मदूषकाः ।**
**सर्वपापैः प्रमुच्यन्ते श्रुत्वेदं शास्त्रमुत्तमम् ॥६॥**

संसारमा पाप गर्ने, धर्मप्रदूषक आदि सबै यो उत्तम शास्त्र सुनी सबै पापबाट मुक्त हुन्छन्

**तस्मादिदं वेदविद्भिरध्येतव्यं प्रयत्नतः ।**

**शिष्येभ्यश्च प्रवक्तव्यं सद्वृत्तेभ्यश्च धर्मतः ॥७॥**

अतः वेद जान्नेले यो शास्त्र खूब ध्यान दिएर पढ्नू र ध्यान दिएर उत्तम आचरण गर्ने शिष्यलाई पढाउनू ।

**अकुलीने ह्यसद्वृत्ते जडे शूद्रे शठे द्विजे ।**
**एतेष्वेव न दातव्यमिदं शास्त्रं द्विजोत्तमैः ॥८॥**

दुष्ट कुलमा जन्मिएका, दुराचारी, मूर्ख, शूद्र र दुष्ट द्विजलाई ब्राह्मणले यो शास्त्रको ज्ञान नदिनू ।

**एकमप्यक्षरं यस्तु गुरुः शिष्ये निवेदयेत् ।**
**पृथिव्यां नास्ति तद्द्रव्यं यद्दत्त्वा ह्यनृणी भवेत् ॥९॥**

शिष्यले एक अक्षर मात्र ज्ञान दिने गुरुलाई पनि दिएर ऋणमुक्त हुने यो पृथ्वीमा कुनै वस्तु छैन ।

**एकाक्षरप्रदातारं यो गुरुं नाभिमन्यते ।**
**शुनां योनिशतं गत्वा चाण्डालेष्वभिजायते ॥१०॥**

एक अक्षर मात्र ज्ञान दिनेलाई पनि जसले गुरु मान्दैन, त्यसले सय जन्मसम्म कुकुर अनि चाण्डाल भएर जन्मनु पर्दछ ।

**वेदं गृहीत्वा यः कश्चिच्छास्त्रं चैवावमन्यते ।**
**स सद्यः पशुतां याति संभवानेकविंशतिम् ॥११॥**

जो वेद र शास्त्रलाई जानेर (वा पढेर) अपमान गर्दछ त्यसले चाँडै एक्काईस जन्मसम्म पशु भएर जन्मनु पर्दछ ।

**स्वानि कर्माणि कुर्वाणा दूरे संतोऽपि मानवाः ।**
**प्रिया भवन्ति लोकस्य स्वे स्वे कर्मण्युपस्थिताः ॥१२॥**

आआफ्ना कर्म गर्दै बसेका मानिस टाढै भए पनि आआफ्ना कर्ममा लागिरहँदा लोकप्रिय हुने गर्दछन् ।

**कर्म विप्रस्य यजनं दानमध्ययनं तपः ।**
**प्रतिग्रहोऽध्यापनं च याजनं चेतिवृत्तयः ॥१३॥**

ब्राह्मणको यज्ञ गर्नु, दान दिनु, पढ्नु र तपस्या गर्नु कर्म हुन् र यज्ञ गराउनु, पढाउनु र दान लिनु पेसा हुन् ।

**क्षत्रियस्यापि यजनं दानमध्ययनं तपः ।**

**शस्त्रोपजीवनं भूतरक्षणं चेति वृत्तयः ॥१४॥**

छेत्रीको यज्ञ गर्नु, दान दिनु, पढ्नु र तपस्या गर्नु कर्म हुन् तथा हतियारको काम र अरुको रक्षा गर्नु पेसा हुन् ।

**दानमध्ययनं वार्ता यजनं चेति वै विशः ।**
**शूद्रस्य वार्ता शुश्रूषा द्विजानां कारुकर्म च ॥१५॥**

वैश्यका दान दिनु, पढ्नु र यज्ञ गर्नु पेसा हुन् । शूद्रका द्विजको सेवा र कालिगढी पेसा हुन् ।

**तदेतत्कर्माभिहितं संस्थिता यत्र वर्णिनः ।**
**बहुमानमिह प्राप्य प्रयान्ति परमां गतिम् ॥१६॥**

जुन कर्ममा चारै वर्ण आश्रित छन्, जुन कर्म गर्नाले यस लोकमा ठूलो मान पाई मृत्युपछि मोक्ष हुन्छन्, मैले त्यसको बयान गरेको छु ।

**ये व्यपेताः स्वधर्माच्च परधर्मेष्ववस्थिताः ।**
**तेषां शास्तिकरो राजा स्वर्गलोके महीयते ॥१७॥**

आफ्नो धर्म पालना नगरी परधर्म अपनाउनेलाई दण्ड दिने राजा स्वर्गलोकमा पूजिन्छन् ।

**आत्मीये संस्थितो धर्मे शूद्रोऽपि स्वर्गमश्नुते ।**
**परधर्मो भवेत्त्याज्यः सुरूपरदारवत् ॥१८॥**

आफ्नो धर्ममा अडिग रहने शूद्रले पनि स्वर्गको भोग गर्दछ । राम्री परस्त्रीझैं परधर्म त्याज्य हुन्छ ।

**वध्यो राज्ञा स वै शूद्रो जपहोमपरश्च यः ।**
**ततो राष्ट्रस्य हंताऽसौ यथा वह्नेश्च वै जलम् ॥१९॥**

जपहोममा तत्पर शुद्र राजाद्वारा मारिन योग्य छ किनकि त्यसले आगोलाई पानीले झैं देशलाई नाश गर्दछ ।

**प्रतिग्रहोऽध्यापनं च तथाऽविक्रेयविक्रयः ।**
**याज्यं चतुर्भिरप्येतैः क्षत्रविट्पतनं स्मृतम् ॥२०॥**

दान लिनु, पढाउनु, बेच्न नहुने कुरा बेच्नु र यज्ञ गराउनु -यी चार कुराले छेत्री र वैश्य पतित हुन्छन् भनिएको छ ।

**सद्यः पतति मांसेन लाक्षया लवणेन च ।**
**त्र्यहेण शूद्रो भवति ब्राह्मणः क्षीरविक्रयी ॥२१॥**

मासु, लाहा र नुन बेच्नाले ब्राह्मण पतित हुन्छ भने दूध बेच्नाले तीन दिनमै शूद्र हुन्छ ।

**अव्रताश्चानधीयाना यत्र भैक्षाचरा द्विजाः ।**
**तं ग्रामं दंडयेद्राजा चौरभक्तददंडवत् ॥२२॥**

व्रतहीन र अनपढ ब्राह्मण भिक्षा माग्दै हिँड्ने गाऊँलाई राजाले चोरीको वस्तु उपभोग गरेको दण्ड दिनू ।

**विद्वद्भोज्यमविद्वांसो येषु राष्ट्रेषु भुंजते ।**
**तेऽप्यनावृष्टिमिच्छंति महद्वा जायते भयम् ॥२३॥**

जुन देशमा विद्वानले भोग्ने कुरा मूर्खले भोग्दछन् त्यो देशमा अनावृष्टि आदिको ठूलो डर हुन्छ ।

**ब्राह्मणान्वेदविदुषः सर्वशास्त्रविशारदान् ।**
**तत्र वर्षति पर्जन्यो यत्रैतान्पूजयेन्नृपः ॥२४॥**

जुन देशमा वेदजानेका र शास्त्रजानेका ब्राह्मण राजाद्वारा पूजिन्छन् त्यहाँ बादल वर्षन्छ ।

**त्रयो लोकास्त्रयो वेदा आश्रमाश्च त्रयोऽग्नयः ।**
**एतेषां रक्षणार्थाय संसृष्टा ब्राह्मणाः पुरा ॥२५॥**

तीनै लोक, तीनै वेद र तीनै अग्निको रक्षाका लागि भनेर नै सबैभन्दा पहिले ब्राह्मणको सृष्टि गरिएको हो ।

**उभे संध्ये समाधाय मौनं कुर्वन्ति ये द्विजाः ।**
**दिव्यवर्षसहस्राणि स्वर्गलोके महीयते ॥२६॥**

जो दुवै सन्ध्यामा ध्यान लगाएर मौन धारण गर्दछ त्यो द्विज दिव्य हजार वर्षसम्म स्वर्गमा पूजिन्छ ।

**य एवं कुरुते राजा गुणदोषपरीक्षणम् ।**
**यशः स्वर्गे नृपत्वं च पुनः कोशं च सोऽर्जयेत् ॥२७॥**

जुन् राजा यसरी गुण र दोषको परीक्षा गर्दछ उसले यश, स्वर्ग, राज्य, र कोषलाई फेरी सञ्चय गर्दछ ।

**दुष्टस्य दंडः सुजनस्य पूजा न्यायेन कोशस्य च संप्रवृद्धिः ।**

**अपक्षपातोऽर्थिषु राष्ट्ररक्षाः पंचैव यज्ञाः कथिता नृपाणाम् ॥२८॥**

दुष्टलाई दण्ड, श्रेष्ठलाई पुरस्कार वा पूजा, न्यायसङ्गत तरिकाले कोषको वृद्धि, पाहुनाप्रति पक्षपातको अभाव र आफ्नो देशको रक्षा-यी पाँच कुरा राजाका लागि यज्ञ हुन् भनी बताइएको छ ।

**यत्प्रजापालने पुण्यं प्राप्नुवन्तीह पार्थिवाः ।**
**नतु क्रतुसहस्रेण प्राप्नुवन्ति द्विजोत्तमाः ॥२९॥**

प्रजापालन गर्नाले राजालाई यसलोकमा जुन पुण्य प्राप्त हुन्छ हे द्विजश्रेष्ठ ! त्यो पुण्य हजार यज्ञ गरेर पनि पाइन्न ।

**अलाभे देवखातानां ह्रदेषु सरसीसु च ।**
**उद्धृत्य चतुरःपिंडान्पारक्ये स्नानमाचरेत् ॥३०॥**

देवनिर्मित जलाशय नपाई अर्काको कुवा, तलाउ आदिमा नुहाउनु परे त्यस्ता जलाशयबाट माटोका चार डल्ला निकालेर मात्र नुहाउनू ।

**वसा शुक्रमसृङ्मज्जा मूत्रं विट् कर्णविण्णखाः ।**
**श्लेष्मास्थि दूषिका स्वेदो द्वादशैते नृणां मलाः ॥३१॥**

बोसो, वीर्य, रगत, मासी, मूत्र, विष्ठा, कानेगुजी, नङ, कफ, हाड, चिप्रा र पसिना मानिसका बाह्र मल हुन् ।

**षण्णां षण्णां क्रमेणैव शुद्धिरुक्ता मनीषिभिः ।**
**मृद्वारिभिश्च पूर्वेषामुत्तरेषां तु वारिणा ॥३२॥**

विद्वानले अगिल्ला छ ( बोसो, वीर्य, रगत, मासी, मूत्र, विष्ठा ) को शुद्धि जल र माटोले र पछिल्ला छ ( कानेगुजी, नङ, कफ, हाड, चिप्रा र पसिना ) को शुद्धि जलमात्रले हुन्छ भनी बताएका छन् ।

**शौचं मङ्गलनायासाः अनसूयाऽस्पृहा दमः ।**
**लक्षणानि च विप्रस्य तथा दानं दयापि च ॥३३॥**

शौच, मङ्गल, आयास, अनसूया, अस्पृहा, दम, दान र दया ब्राह्मणका लक्षण हुन् ।

**अभक्ष्यपरिहारश्च संसर्गश्चाप्यनिंदितैः ।**
**आचारेषु व्यवस्थानं शौचमित्यभिधियते ॥३४॥**

खान नहुने कुरा नखानु, सज्जनको सङ्गत गर्नु र उत्तम आचरणमा रहनुलाई शौच भनिन्छ ।

**प्रशस्ताचरणं नित्यमप्रशस्तविवर्जनम् ।**
**एतद्धि मङ्गलं प्रोक्तमृषिभिर्धर्मदर्शिभिः ॥३५॥**

दिनहुँ उत्तम आचरण गर्नु र निन्दित आचरण त्याग गर्नुलाई ऋषिहरुले मङ्गल भनेका छन् ।

**शरीरं पीड्यते येन शुभेन ह्यशुभेन वा ।**
**अत्यन्तं तन्न कुर्वीत अनायासः स उच्यते ॥३६॥**

शरीरलाई पिडा पुऱ्याउने कुनै पनि शुभअशुभ कर्म नगर्नुलाई अनायास भनिन्छ ।

**न गुणान्गुणिनो हन्ति स्तौति चान्यान्गुणानपि ।**
**न हसेच्चान्यदोषांश्च सानसूया प्रकीर्तिता ॥३७॥**

गुणीको गुण नष्ट नगर्नु, अर्काको गुणको प्रशंसा गर्नु र अर्काको दोषको उपहास नगर्नुलाई अनसूया बताइएको छ ।

**यथोत्पन्नेन कर्तव्यः संतोषः सर्ववस्तुषु ।**
**न स्पृहेतत्परदारेषु साऽस्पृहा च प्रकीर्तिता ॥३८॥**

उपलब्ध वस्तुमा सन्तोष लिनु र परस्त्रीको चाहना नगर्नु अस्पृहा हो ।

**वाह्य आध्यात्मिके वाऽपि दुःख उत्पादिते परैः ।**
**न कुप्यति न चाहन्ति दम इत्यभिधीयते ॥३९॥**

शत्रुले दिएको शारीरिक वा मानसिक दुःखबाट पनि नरिसाउनु र हिंसा नगर्नुलाई दम भनिएको छ ।

**अहन्यहनि दातव्यमदीनेनान्तरात्मना ।**
**स्तोकादपि प्रयत्नेन दानमित्याभिधीयते ॥४०॥**

प्रसन्न चित्तले प्रतिदिन प्रयत्नपूर्वक अन्न आदि दिनुलाई दान भनिन्छ ।

**परस्मिन्बन्धुवर्गे वा मित्रे द्वेष्ये रिपौ तथा ।**
**आत्मवद्वर्त्तितव्यं हि दयैषा परिकीर्त्तिता ॥४१॥**

पराई, नातेदार, मित्र, द्वेषी र शत्रु-यी सबैलाई आफूसमान व्यवहार गर्नुलाई दया भनिन्छ ।

**यश्चैतैर्लक्षणैर्युक्तो गृहस्थोऽपि भवेद्द्विजः ।**
**स गच्छति परं स्थानं जायते नेह वै पुनः ॥४२॥**

जो गृहस्थी यी लक्षणले युक्त हुन्छ त्यसले उत्तम स्थान पाउँछ र फेरी यसलोकमा जन्म लिनु पर्दैन ।

**इष्टापूर्तं च कर्त्तव्यं ब्राह्मणेनैव यत्नतः ।**
**इष्टेन लभते स्वर्गं पूर्त्ते मोक्षो विधीयते ॥४३॥**

ब्राह्मणले प्रयत्नपूर्वक इष्ट र पूर्त कर्म गर्नू । इष्टले स्वर्ग र पूर्तले मोक्ष मिल्दछ ।

**अग्निहोत्रं तपः सत्यं वेदानां चैव पालनम् ।**
**आतिथ्यं वैश्वदेवश्च इष्टमित्यभिधीयते ॥४४॥**

अग्निहोत्र, तपस्या, सत्य आचरण, वेदको रक्षा, अतिथि सत्कार र बलिवैश्वदेव गर्नुलाई इष्टकर्म भनिन्छ ।

**वापीकूपतडागादि देवतायतनानि च ।**
**अन्नप्रदानमारामः पूर्त्तमित्यभिधीयते ॥४५॥**

पोखरी, कुवा, तलाउ, र मन्दिर बनाउनु; अन्न दान गर्नु र वाटिका बनाउनुलाई पूर्तकर्म भनिन्छ ।

**इष्टापूर्त्ते द्विजातीनां सामान्ये धर्मसाधने ।**
**अधिकारी भवेच्छूद्रः पूर्त्ते धर्मे न वैदिके ॥४६॥**

द्विजका इष्ट र पूर्त सामान्य धर्म-साधन हुन् । शूद्रलाई पूर्तकर्म गर्नमा अधिकार छ तर वेदोक्त धर्म गर्नमा छैन ।

**यमान्सेवेत सततं न नित्यं नियमान्बुधः ।**
**यमान्पतत्यकुर्व्वाणो नियमान्केवलान्भजन् ॥४७॥**

बुद्धिमानले नियममा भन्दा पनि यममा जोड दिनू, यमभन्दा नियममा जोड दिनाले पतन हुनबाट बच्न मुश्किल हुन्छ ।

**आनृशंस्यं क्षमा सत्यमहिंसा दानमार्जवम् ।**
**प्रीतिः प्रसादो माधुर्य्यं मार्दवं च यमा दश ॥४८॥**

अक्रूरता, क्षमा, सत्य, अहिंसा, दान, नम्रता, प्रीति, प्रसन्नता, मिठोवचन र कोमल स्वभाव-यी दश यम हुन् ।

**शौचमिज्या तपो दानं स्वाध्यायोपस्थनिग्रहः ।**
**व्रतमौनोपवासं च स्नानं च नियमा दश ॥४९॥**

शौच, यज्ञ, तप, दान, वेदाध्ययन, जननेन्द्रियको नियन्त्रण, व्रत, मौन, उपवास र स्नान-यी दश नियम हुन् ।

**प्रतिनिधिं कुशमयं तीर्थवारिषु मज्जति ।**
**यमुद्दिश्य निमज्जेत अष्टभागं लभेत सः ॥५०॥**

जसले कुशको प्रतिमा लिएर तीर्थस्नान गर्दछ त्यसले स्नानको फलको आठौं भाग पाउँदछ ।

**मातरं पितरं वापि भ्रातारं सुहृदं गुरुम् ।**
**यमुद्दिश्य निमज्जेत द्वादशांशफलं भवेत् ॥५१॥**

माता, पिता, दाजुभाई, गुरुमध्ये जसको लागि तीर्थमा डुबुल्की लगाइएको हो त्यसले १२ औं भाग फल पाउँदछ ।

**अपुत्रेणैव कर्त्तव्यः पुत्रप्रतिनिधिः सदा ।**
**पिंडोदकक्रियाहेतोर्यस्मात्तस्मात्प्रयत्नतः ॥५२॥**

छोरो नहुनेले पिण्डदान र जलदानका खातिर प्रतिनिधि पुत्र (दत्तक पुत्र) प्रयत्नपूर्वक प्राप्त गर्नू ।

**पिता पुत्रस्य जातस्य पश्येच्चेज्जीवतो मुखम् ।**
**ऋणमस्मिन्संनयति अमृतत्वं च गच्छति ॥५३॥**

बाबुले जन्मेको जिवित पुत्रको मुख देखेपछि उसलाई ऋण सुम्पेर पितृऋणबाट मुक्त हुन्छ र मोक्ष प्राप्त गर्दछ ।

**जातमात्रेण पुत्रेण पितृणामनृणी पिता ।**
**तदह्नि शुद्धिमाप्नोति नरकात्त्रायते हि सः ॥५४॥**

छोरो जन्मेपछि नै बाबु पितृको अऋणी हुन्छ र त्यसैदिन शुद्ध हुन्छ किनकि पुत्रले पितालाई नरकबाट जोगाउँछ ।

**एष्टव्या बहवः पुत्रा यद्येकोऽपि गयां व्रजेत् ।**
**यजेत चाश्वमेधं च नीलं वा वृषमुत्सृजेत् ॥५५॥**

धेरैमध्ये एउटा मात्र छोरो पनि यदि गया गई निलो साँढेले वृषोत्सर्ग गर्दछ भने त्यो अश्वमेध यज्ञ गरे समान हुन्छ ।

**कांक्षन्ति पितरः सर्वे नरकान्तरभीरवः ।**
**गयां यास्यति यःपुत्रःस नस्त्राता भविष्यति ॥५६॥**

अनेकौं नरकबाट भयभीत पितृहरु एउटा न एउटा छोरो गया जाला र हाम्रो उद्धार गर्ला भन्ने आशमा हुन्छन् ।

**फल्गुतीर्थे नरः स्नात्वा दृष्ट्वा देवं गदाधरम् ।**
**गयाशीर्षे पदाऽऽक्रम्य मुच्यते ब्रह्महत्यया ॥५७॥**

फल्गुतीर्थमा स्नान गरी गदाधरको दर्शन र गयासुरको टाउकामा कुल्चनाले ब्रह्महत्याबाट पनि मुक्ति मिल्छ ।

**महानदीमुपस्पृश्य तर्पयेत्पितृदेवताः ।**
**अक्षयाँल्लभते लोकान्कुलं चैव समुद्धरेत् ॥५८॥**

महानदीमा स्नान गरी जसले पितृ र देवतालाई तर्पण गर्दछ त्यसले अक्षय लोक प्राप्त गरी कुलको उद्धार गर्दछ ।

**शंकास्थाने समुत्पन्ने भक्ष्यभोग(भोज्य)विवर्जिते ।**
**आहारशुद्धिं वक्ष्यामि तन्मे निगदतः श्रृणु ॥५९॥**

भक्ष्य र अभक्ष्य स्थानका बारेका द्विविधा भए भोजनको शुद्धि कसरी गर्ने भन्ने बारेमा म सँग सुन ।

**अक्षारलवणं भैक्षं (रौक्षं) पिवेद्ब्राह्मीं सुवर्चलाम् ।**
**त्रिरात्रं शङ्खपुष्पीं च ब्राह्मणः पयसा सह ॥६०॥**

ब्राह्मणले बिरे नुन वा नुन रहित शङ्कास्पद खाना खाए तेजवर्द्धक घोडताप्रे वा शङ्खपुष्पी तीन रात दूधसँग पिउनू ।

**मद्यभांडे द्विजः कश्चिदज्ञानात्पिबते जलम् ।**
**प्रायश्चित्तं कथं तस्य मुच्यते केन कर्मणा ॥६१॥**

मदिराको भाँडोमा कुनै द्विजले अज्ञानमा जल पिए के गरी प्रायश्चित हुन्छ र के गर्नाले दोषमुक्त हुन्छ ? ।

**पालाशबिल्वपत्राणि कुशान्पद्मान्युदुम्बरम् ।**

**क्वाथयित्वा पिबेदापस्त्रिरात्रेणैव शुद्ध्यति ॥६२॥**

पलाँश, बेलपत्र, कुश, कमल र डुम्रीको काँढापानी बनाई तीन रात पिउनाले शुद्ध हुन्छ ।

**सायं प्रातस्तु यः सन्ध्यां प्रमादाद्विक्रमेत्सकृत् ।**
**गायत्र्यास्तु सहस्रं हि जपेत्स्नात्वा समाहितः ॥६३॥**

प्रमादले बिहानबेलुकीको सन्ध्यावन्धन त्याग गर्नेले नुहाएर सावधान भई एक हजार गायत्री जप गर्नू ।

**रोगाक्रान्तोऽथवाऽऽयासात् स्थितः स्नानजपाद्बहिः ।**
**ब्रह्मकूर्चं चरेद्भक्त्या दानं दत्त्वा विशुद्ध्यति ॥६४॥**

रोगका कारण स्नान गर्न नसकेमा वा स्नानगरी जप गर्न नसकेमा कुश-पानी छर्की दान दिनाले शुद्ध हुन्छ ।

**गवां श्रृङ्गोदके स्नात्वा महानद्युपसंगमे ।**
**समुद्रदर्शने चापि व्यालदष्टः शुचिर्भवेत् ॥६५॥**

सर्पले टोकेमा, गाईको सिङको जलले वा ठूला नदीमा नुहाउनाले वा समुद्रको दर्शनले शुद्ध हुन्छ ।

**वृकश्वानश्रृगालैस्तु यदि दष्टस्तु ब्राह्मणः ।**
**हिरण्योदकसंमिश्रं घृतं प्राश्य विशुद्ध्यति ॥६६॥**

ब्राह्मणलाई ब्वाँसा, कुकुर र स्यालले  टोकेमा, सुनपानी मिसाइएको घिउ खानाले शुद्ध हुन्छ ।

**ब्राह्मणी तु शुना द्रष्टा जंबुकेन वृकेण वा ।**
**उदितं ग्रहनक्षत्रं दृष्ट्वा सद्यः शुचिर्भवेत् ॥६७॥**

ब्राह्मणीलाई कुकुर, ब्वाँसो र स्यालले टोकेमा, उदाएका ग्रहनक्षत्रको दर्शनले शीघ्र शुद्ध हुन्छे ।

**सव्रतस्तु शुना दष्टस्त्रिरात्रमुपवासयेत् ।**
**सघृतं यावकं प्राश्य व्रतशेषं समापयेत् ॥६८॥**

ब्रतबसेका ब्राह्मणलाई कुकुरले टोकेमा, तीन दिन उपवास बसी घिउ र जौले बनेका पदार्थ खाई बाँकी व्रत सकून् ।

**मोहात्प्रमादात्संलोभाद्व्रतभङ्गं तु कारयेत् ।**
**त्रिरात्रेणैव शुद्ध्येत पुनरेव व्रती भवेत् ॥६९॥**

मोह, प्रमाद वा लोभले अरुको व्रत तोड्ने व्यक्ति तीन दिनमा शुद्ध भई व्रत बस्न योग्य हुन्छ ।

**ब्राह्मणानां यदुच्छिष्टमश्नात्यज्ञानतो द्विजः ।**
**दिनद्वयं तु गायत्र्या जपं कृत्वा विशुद्ध्यति ॥७०॥**

अज्ञानमा ब्राह्मणको जुठो खाने ब्राह्मण दुई दिनसम्म गायत्री जप गरेर शुद्ध हुन्छ ।

**क्षत्रियान्नं यदुच्छिष्टमश्नात्यज्ञानतो द्विजः ।**
**त्रिरात्रेण भवेच्छुद्धिर्यथा क्षत्रे तथा विशि ॥७१॥**

अज्ञानमा छेत्रीको जुठो खाने ब्राह्मण तीन रात गायत्री जप गरेर शुद्ध हुन्छ, छेत्रीको झैं वैश्यको शुद्धि हुन्छ ।

**अभोज्यान्नं तु भुक्तान्नं स्त्रीशूद्रोच्छिष्टमेव वा ।**
**जग्ध्वा मांसमभक्ष्यं च सप्तरात्रं यवान्पिवेत् ॥७२॥**

अभक्ष्य, जुठो, स्त्री-शूद्रको जुठो र खान नहुने मासु खाए सात दिनसम्म जौ पिउनू ।

**असंस्पृश्येन संस्पृष्टः स्नानं तेन विधीयते ।**
**तस्य चोच्छिष्टमश्नीयात्षण्मासान् कृच्छ्रमाचरेत् ॥७३॥**

छुन नहुने कुरा छोए नुहाउनु पर्नेविधान छ, यदि त्यस्ताको जुठो खाएमा त छ६ महिनासम्म कृच्छ्र व्रत बस्नु पर्दछ ।

**अज्ञानात्प्राश्य विण्मूत्रं सुरासंस्पृष्टमेव वा ।**
**पुनः संस्कारमर्हंति त्रयो वर्णा द्विजातयः ॥७४॥**

अज्ञानमा मलमूत्र मिसिएको वा मदिरा मिसिएको वस्तु खाइएमा द्विजातिले पुनः संस्कार गर्नु पर्दछ ।

**वपनं मेखला दंडं भैक्ष्यचर्यं व्रतानि च ।**
**निवर्त्तन्ते द्विजातीनां पुनः संस्कारकर्मणि ॥७५॥**
द्विजातीहरु मुंडन, कन्धनी, दण्ड, भिक्षाटन र व्रतकर्म नष्ट हुँदा पुनः संस्कारका योग्य हुन्छन् ।

**गृहशुद्धिं प्रवक्ष्यामि अंतःस्थशवदूषिताम् ।**
**प्रत्याज्यं मृण्मयं भाण्डं सिद्धमन्नं तथैव च ॥७६॥**

घरमा लाश परेको शुद्धिको उपाय बताउँछु-माटाका भाँडा प्रयोग गर्नु र अरुले बनाएको अन्न खानू ।

**गृहान्निष्क्रम्य तत्सर्वं गोमयेनोपलेपयेत् ।**
**गोमयेनोपलिप्याथ छागेनाघ्रापयेत् पुनः ॥७७॥**

घरबाट लाश निकालि सकेपछि घरलाई गोबरले लिपाउनू र बोकाले सुँघाउनू ।

**ब्राह्मैर्मन्त्रैस्तु पूतं तु हिरण्यकुशवारिभिः ।**
**तेनैवाभ्युक्ष्य तद्वेश्म शुद्ध्यते नात्र संशयः ॥७८॥**

वेदमन्त्रले पवित्र गरिएको घर फेरी वेदमन्त्र र सुनपानी वा कुशपानी छर्केर शुद्ध हुन्छ यसमा शङ्का छैन ।

**राजन्यैः श्वपचैर्वापि बलाद्विचलितो द्विजः ।**
**पुनः कुर्वीत संस्कारं पश्चात्कृच्छ्रत्रयं चरेत् ॥७९॥**

राजा वा अरु चाण्डाल आदिले द्विजलाई धर्मबाट विचलित गरेमा फेरी संस्कार गरी कृच्छ्र व्रत बस्नु पर्दछ ।

**शुना चैव तु संस्पृष्टस्तस्य स्नानं विधीयते ।**
**तदुच्छिष्टं तु संप्राश्य यत्नेन कृच्छ्रमाचरेत् ॥८०॥**

कुकुरले छोए नुहाउनु पर्नेविधान छ, यदि त्यसको जुठो खाइएमा त यत्नपूर्वक कृच्छ्र व्रत बस्नु पर्दछ ।

**अतः परं प्रवक्ष्यामि सूतकस्य विनिर्णयम् ।**
**प्रायश्चित्तं पुनश्चैव कथयिष्यामतः परम् ॥८१॥**

यसपछि सूतक-निर्णयका बारेमा र त्यसपछि प्रायश्चितका बारेमा बताउनेछु ।

**एकाहाच्छुद्ध्यते विप्रो योऽग्निवेदसमन्वितः ।**
**त्र्यहात्केवलवेदस्तु निर्गुणो दशभिर्दिनैः ॥८२॥**

आशौची ब्राह्मण अग्निहोत्री र वेदपाठी भए एक दिनमा शुद्ध हुन्छ । वेदपाठी मात्र भए तीन दिनमा र गुणहीन भए दश दिनमा शुद्ध हुन्छ ।

**व्रतिनः शास्त्रपूतस्य आहिताग्नेस्तथैव च ।**
**राज्ञां तु सूतकं नास्ति यस्य चेच्छन्ति ब्राह्मणाः ॥८३॥**

व्रती, शास्त्र अनुसार पवित्र, अग्निहोत्री र राजालाई तथा ब्राह्मणले आशौच बार्न नचाहेको व्यक्तिको आशौच लाग्दैन ।

**ब्राह्मणो दशरात्रेण द्वादशाहेन भूमिपः ।**
**वैश्यः पञ्चदशाहेन शूद्रो मासेन शुद्धयति ॥८४॥**

ब्राह्मण दश रातमा, क्षत्रिय बाऱ्ह दिनमा, वैश्य पन्ध्र दिनमा र शूद्र एक महिनामा शुद्ध हुन्छन् ।

**सपिण्डानां तु सर्वेषां गोत्रजः सप्तपौरुषः ।**
**पिण्डांश्चोदकदानं च शावशौचं तथाऽनुगम् ॥८५॥**

सबै सपिण्डीमध्ये सात पुस्तासम्म गोत्रज हुन्छन् र तिनलाई पिण्डदान, जलदान र जुठो बार्ने अधिकार हुन्छ ।

**चतुर्थे दशरात्रं स्यात्षडहः पञ्चमे तथा ।**
**षष्ठे चैव त्रिरात्रं स्यात्सप्तमे त्र्यहमेव वा ॥८६॥**

चौथो पुस्तासम्म दश रात, पाँचौ पुस्तालाई छ दिन, छैठौं पुस्तालाई तीन रात र सातौं पुस्तालाई तीन दिन आशौच लाग्छ ।

**मृतसूतके तु दासीनां पत्नीनां चानुलोमिनाम् ।**
**स्वामितुल्यं भवेच्छौचं मृते भर्तरि यौनिकम् ॥८७॥**

दासी र तल्लो जातका पत्नीहरुलाई पतिसरह जुठो लाग्छ । पति मरे आफ्नो जात अनुसार मृतआशौच लाग्छ ।

**शवस्पृष्टतृतीयस्तु सचैलः स्नामाचरेत् ।**
**चतुर्थे सप्तभैक्ष्यं स्यादेष शावविधि स्मृतः ॥८८॥**

तेश्रो पुस्ताकाले लाश छोए सचैल स्नान गर्नु र चौथो पुस्ताकाले छोए सात घरको भिक्षा खानु भनी शास्त्रमा बताइएको छ ।

**एकत्र संस्कृतानां तु मातृणामेकभोजिनाम् ।**
**स्वामितुल्यं भवेच्छौचं विभक्तानां पृथक्पृथक् ॥८९॥**

एकपटक संस्कार गरिएकी र एउटै भान्छामा खाने आमाको पतिको जात अनुसार आशौच बार्नू, छुट्टै बसेकी भए आमाकै जात अनुसार बार्नू ।

**उष्ट्रीक्षीरमवीक्षीरं पक्वान्नं मृतसूतके ।**
**पाचकान्नं नवश्राद्धं भुक्त्वा चान्द्रायणं चरेत् ॥९०॥**

ऊँट र भेडीको दूध, जुठोसूतक परेकाको पकाएको अन्न वा भान्छेको काम गर्नेको अन्न वा ११ औंको अन्न खाए चान्द्रायण व्रत गर्नू ।

**सूतकान्नमधर्माय यस्तु प्राश्नाति मानवः ।**
**त्रिरात्रमुपवासः स्यादेकरात्रं जले वसेत् ॥९१॥**

अधर्मका लागि सूतकको अन्न खाने मानिसले तीन रात उपवास बसी एक रात पानीमा बस्नू ।

**महायज्ञविधानं तु न कुर्यान्मृतजन्मनि ।**
**होमं तत्र प्रकुर्वीत शुष्कान्नेन फलेन वा ॥९२॥**

जुठो-सूतकमा महायज्ञको विधि नगर्नू । त्यसबेला सुक्खा अन्न र फलफूलले होम गर्नू ।

**बालस्त्वंतर्द्दशाहेतु पञ्चत्वं यदि गच्छति ।**
**सद्य एव विशुद्धिः स्यान्न प्रेतं नैव सूतकम् ॥९३॥**

जन्मेको दश दिन भित्र यदि बालकको मृत्यु भयो भने नुहाउनाले शुद्धि हुन्छ, जुठोसूतक लाग्दैन ।

**कृतचूडे प्रकुर्वीत उदकं पिण्डमेव च ।**
**स्वधाकारं प्रकुर्वीत नामोच्चारणमेव च ॥९४॥**

चूडाकर्म गरेको बालकको मृत्यु भएमा पिण्ड र जलदान दिनू तथा नाम लिएर स्वधा भन्नू ।

**ब्रह्मचारी यतिश्चैव मंत्रे पूर्वकृते तथा ।**
**यज्ञे विवाहकाले च सद्यः शौचं विधीयते ॥९५॥**

ब्रह्मचारी, सन्यासी, पहिलेदेखि मन्त्र जप्न शुरु गरेको तथा यज्ञ वा विवाह गरिरहेको व्यक्ति तत्काल शुद्ध हुन्छ ।

**विवाहोत्सवयज्ञेषु अन्तरा मृतसूतके ।**
**पूर्वसङ्कल्पितार्थस्य न दोषश्चात्रिरब्रवीत् ॥९६॥**

विवाह, उत्सव र यज्ञ गर्दा जुठो-सूतक परेपनि पहिलेदेखि सङ्कल्प गरिएका वस्तु खानलाई दोष हुँदैन भनी अत्रि ऋषिले बताएका छन् ।

**मृतसंजननोर्द्ध्वं सूतकादौ विधीयते ।**
**स्पर्शनाचमनाच्छुद्धिः सूतिकाञ्चेन्न संस्पृशेत् ॥९७॥**

मरेको बालक जन्मेमा यदि सुत्केरीलाई छोइएको छैन भने जलस्पर्श र आचमन गरी शुद्धि हुन्छ भनी बताइएको छ ।

**पञ्चमेऽहनि विज्ञेयं संस्पर्शं क्षत्रियस्य तु ।**
**सप्तमेऽहनि वैश्यस्य विज्ञेयं स्पर्शनं बुधैः ॥९८॥**

पाँचौ दिन क्षत्रियलाई र सातौं दिन वैश्यलाई छुनु हुन्छ भनी बुद्धिमानले थाहा पाउनू ।

**दशमेऽहनि शूद्रस्य कर्त्तव्यं स्पर्शनं बुधैः ।**
**मासेनैवात्मशुद्धिः स्यात्सूतके मृतके तथा ॥९९॥**

दशौं दिन बुद्धिमानले शूद्रलाई स्पर्श गर्नू । जन्ममरणमा एक महिनामा शूद्रको शुद्धि हुन्छ ।

**(अष्टमे दिनमेकन्तु नवमे प्रहरद्धयम् ।**
**दशमे स्नानमात्रेण सूतके तु शुचिर्भवेत् ॥)**

सुतकमा आठौं दिनका दिन एक प्रहरसम्म, नवौं दिनमा दुई प्रहरसम्म र दशौं दिन नुहाउनाले शुद्ध हुन्छ) ।

**व्याधितस्य कदर्यस्य ऋणग्रस्तस्य सर्वदा ।**
**क्रियाहीनस्य मूर्खस्य स्त्रीजितस्य विशेषतः ॥१००॥**
**व्यसनासक्तचित्तस्य पराधीनस्य नित्यशः ।**
**स्वाध्यायव्रतहीनस्य भस्मान्तं सूतकं भवेत् ॥१०१॥**

रोगी, कन्जुस, सधैं ऋणमा डुबिरहने, कर्म नगर्ने, मूर्ख, स्त्रीको अधिनमा रहने, जुवा आदिको आदत बसेको, सदा अर्काको अधिनमा रहने तथा स्वध्याय र व्रत नगर्नेहरुलाई सधैं जुठो-सूतक भइरहन्छ ।

**द्वे कृच्छ्रे परिवित्तेस्तु कन्यायाः कृच्छ्रमेव च ।**
**कृच्छ्रातिकृच्छ्रं मातुः स्यात्पितुः सान्तपनं कृतम् ॥१०२॥**

परिवेत्ताले दुई कृच्छ्र, कन्याले एक कृच्छ्र, कन्याकी आमाले अतिकृच्छ्र र कन्यादान गर्नेले सान्तपन व्रत गर्नू ।

**कुब्जवामनखञ्जेषु गर्हितेऽथ जडेषु च ।**

**जात्यंधवधिरे मूके न दोषः परिवेदने ॥१०३॥**

कुप्रो, पुड्को, लङ्गडो, तोते बेली बोल्ने, मूर्ख, जन्मान्ध र लाटो  दाजुभन्दा पहिले भाईको विवाह गर्न दोष छैन ।

**क्लीवे देशांतरस्थे च पतिते व्रजितेऽपि वा ।**
**योगशास्त्राभियुक्ते च न दोषः परिवेदने ॥१०४॥**

नपुंसक, परदेशी, पतित, सन्यासी र योगशास्त्रमा तत्पर रहेको दाजुभन्दा पहिले भाईको विवाह गर्न दोष छैन ।

**पिता पितामहो यस्य अग्रजो वापि कस्यचित् ।**
**अग्निहोत्राधिकारोऽस्ति न दोषः परिवेदने ॥१०५॥**

जसका पिता, हजूरबा र दाजुलाई अग्निहोत्रको अधिकार छैन त्यस्तो भाईले दाजुभन्दा पहिले विवाह गर्दा दोष छैन ।

**भार्यामरणपक्षे वा देशांतरगतेऽपि वा ।**
**अधिकारी भवेत्पुत्रस्तथा पातकसंयुगे ॥१०६॥**

स्त्री बितेमा वा परदेश गएमा वा पापी भएमा पुत्र अग्निहोत्र आदि कर्म गर्ने अधिकारी हुन्छ ।

**ज्येष्ठो भ्राता यदा नष्टो नित्यं रोगसमन्वितः ।**
**अनुज्ञातस्तु कुर्वीत शङ्खस्य वचनं यथा ॥१०७॥**

जेठो दाजु बितेमा वा दीर्घरोगी भएमा उनको आज्ञा लिएर भाईले विवाह गर्नू भनी शङ्ख ऋषिले भनेका छन् ।

**नाग्नयः परिविन्दन्ति न वेदा न तपांसि च ।**
**न च श्राद्धं कनिष्ठो वै बिना चैवाभ्यनुज्ञया ॥१०८॥**

कान्छो भाईलाई दाजुको अनुमति नलिई अग्निहोत्र गर्ने, वेद पढ्ने, तप गर्ने र श्राद्ध गर्ने अधिकार छैन ।

**तस्माद्धर्मं सदा कुर्याच्छ्रुतिस्मृत्युदितं च यत् ।**
**नित्यं नैमित्तिकं काम्यं यच्च स्वर्गस्य साधनम् ॥१०९॥**

यसकारण वेद र स्मृतिमा वर्णन भएका स्वर्गप्रदायक नित्य, नैमित्तिक र काम्य कर्म सधैं गर्ने गर्नू ।

**एकैकं वर्द्धयेन्नित्यं शुक्ले कृष्णे च ह्रासयेत् ।**
**अमावस्यां न भुंजीत एष चान्द्रायणो विधिः ॥११०॥**

शुक्लपक्षमा १,१ गाँस बढाउनू, कृष्णपक्षमा १,१ गाँस घटाउनू र औंसीमा भोकै बस्नू चान्द्रायण व्रतको विधि हो ।

**एकैकं ग्रासमश्नीयात्त्र्यहाणि त्रीणि पूर्ववत् ।**
**त्र्यहं परं च नाश्नीयादतिकृच्छ्रं तदुच्यते ॥**
**इत्येतत् कथितं पूर्वैर्महापातकनाशनम् ॥१११॥**

शुरुका ३ दिन १,१ गाँस खाएर पछिल्ला ३ दिन भोकै बस्नुलाई अतिकृच्छ्र भनिन्छ । पहिलेका ऋषिहरुले यसलाई महापाप नाशक प्रायश्चित भनेका छन् ।

**वेदाभ्यासरतं क्षान्तं महायज्ञक्रियापरम् ।**
**न स्पृशन्तीह पापानि महापातकजान्यपि ॥११२॥**

वेद अभ्यासमा संलग्न हुने, क्षमाशील र महायज्ञ गरिरहनेलाई कुनै पनि पाप र महापापले छुँदैन ।

**वायुभक्षो दिवा तिष्ठेद्रात्रिं चैवाप्सु सूर्यदृक् ।**
**जप्त्वा सहस्रं गायत्र्याः शुद्धिर्ब्रह्मबधादृते ॥११३॥**

दिनमा वायु खाँदै अनि राति पानीमा बसेर बिताई (भोलिपल्ट) सूर्यदर्शन गर्दै एक हजार पटक गायत्री मन्त्र जप्नेका ब्रह्महत्या बाहेकका सबै पाप नष्ट हुन्छन् ।

**पद्मोदुम्बरविल्वाश्च कुशाश्वत्थपलाशकाः ।**
**एतेषामुदकं पीत्वा पर्णकृच्छ्रं तदुच्यते ॥११४॥**

कमल, डुम्री, वेल, कुश, पिपल र पलाँशको काँढापानी खाएर दिन बिताउनुलाई पर्णकृच्छ्र व्रत भनिन्छ ।

**पञ्चगव्यं च गोक्षीरं दधि मूत्रं शकृद्घृतम् ।**
**जग्ध्वा परेह्न्युपवसेत्कृच्छ्रं सान्तपनं स्मृतम् ॥११५॥**

सबै मिसाइएको पञ्चगव्य वा छुट्टाछुट्टै गाईको दूध, दही, गहुँत, गोबर वा घिउमध्ये एक थोक खाएर अर्को दिन उपवास बस्नुलाई “सान्तपन कृच्छ्र” व्रत भनिन्छ ।

**पृथक्सान्तपनैर्द्रव्यैः षडहः सोपवासकः ।**
**सप्ताहेन तु कृच्छ्रोऽयं महासान्तपनं स्मृतम् ॥११६॥**

पञ्चगव्यमध्येका एक एक थोक एक एक दिन र एक दिन पञ्चगव्य खाएर ६ दिन बिताई १ दिन उपवास बस्नुलाई ७ दिनको “महासान्तपन कृच्छ्र” व्रत भनिन्छ ।

**त्र्यहं सायं त्र्यहं प्रातस्त्र्यहं भुङ्क्ते त्वयाचितम् ।**
**त्र्यहं परञ्च नाश्नीयात् प्राजापत्योविधि स्मृतः ॥११७॥**

३ दिन साँझ, ३ दिन बिहान, ३ दिन नमागी जे भेटिन्छ त्यही र त्यसपछि ३ दिन केही नखाई बस्नु “प्राजापत्य” व्रतको विधि हुन्छ ।

**सायं तु द्वादशः ग्रासाः प्रातः पञ्चदशस्मृताः ।**
**अयाचितैश्चतुर्विंशं परैस्त्वनशनं स्मृतम् ॥११८॥**

यो व्रतमा साँझमा १२, बिहान १५ वा नमागी पाइएको २४ गाँस र त्यसपछि ३ दिन केही नखानू ।

**कुक्कुटाण्डप्रमाणं स्याद्यावद्वास्य विशेन्मुखे ।**
**एतद्ग्रासं विजानीयाच्छुद्ध्यर्थं कायशोधनम् ॥११९॥**

यो व्रतमा गाँस भन्नाले कुखुराको फुल जति वा व्रतालुको मुखमा अटाउने जति मात्रालाई शरीर शुद्धीका लागि एक गाँस भनी जान्नू ।११९।

**त्र्यहमुष्णं पिवेदापस्त्र्यहमुष्णं पिवेत्पयः ।**
**त्र्यहमुष्णं घृतं पीत्वा वायुभक्षो दिनत्रये ॥१२०॥**

तीन दिन तातो पानी, तीन दिन तातो दूध, तीन दिन तातो घिऊ र तीन दिन वायु भक्षण गर्नू ।

**पलमेकं तु वै सर्पिस्तप्तकृच्छ्रं विधीयते ।**
**षट्पलानि पिवेदापस्त्रिपलं तु पयः पिवेत् ॥१२१॥**

यसरी पिउँदा घिउ एक पल, छ पल जल र तीन पल दूध पिउनू । यो “तप्तकृच्छ्र” व्रत हो ।

**दध्ना च त्रिदिनं भुङ्क्ते त्र्यहं भुङ्क्ते च सर्पिषा ।**
**क्षीरेण तु त्र्यहं भुङ्क्ते वायुभक्षो दिनत्रयम् ॥१२२॥**

३ दिन दही, ३ दिन घिउ ३ दिन दूध र ३ दिन वायु भक्षण गर्नू ।

**त्रिपलं दधिक्षीरेण पलमेकं तु सर्पिषा ।**

**एतदेव व्रतं पुण्यं वैदिकं कृच्छ्रमुच्यते ॥१२३॥**

यसरी व्रत बस्दा दही तीन पला, तीन पला दूध र घिउ एक पल प्रयोग गर्नू । यही नै पवित्र र “वैदिककृच्छ्र” व्रत हो ।

**एकभुक्तेन नक्तेन तथैवायाचितेन च ।**
**उपवासेन चैकेन पादकृच्छ्रः प्रकीर्तितः ॥१२४॥**

एक दिन एक छाक, एक दिन रातमा मात्र र एक दिन नमागी उपलब्ध भएका पदार्थ खाई एक दिन उपवास बस्नाले “पादकृच्छ्र” व्रत हुन्छ ।

**कृच्छ्रातिकृच्छ्रः पयसा दिवसानेकविंशतिम् ।**
**द्वादशाहोपवासेन पराकः परिकीर्त्तितः ॥१२५॥**

दूध पिएर २१ दिन बिताउनु “कृच्छ्रातिकृच्छ्र” व्रत हो । १२ दिनको उपवासलाई “पराक” व्रत भनिन्छ ।

**पिण्याकश्चामतक्रांबुशक्तूनां प्रतिवासरम् ।**
**एकैकमुपवासःस्यात् सौम्यकृच्छ्रः प्रकीर्त्तितः ॥१२६॥**

पिना, दही, जल, सातु एक एक गाँस १,१ दिन खाई १ दिन उपवास बसे “सौम्यकृच्छ्र” व्रत हुन्छ ।

**एषां त्रिरात्रमभ्यासादेकैकस्य यथाक्रमम् ।**
**तुलापुरुष इत्येष ज्ञेयः पञ्चदशाह्निकः ॥१२७॥**

पिना, दही, सातु क्रमैले ३,३ दिन खाएर गरिने १५ दिनको व्रतलाई “तुलापुरुष” व्रत भनिन्छ ।

**कपिलायास्तु दुग्धाया धारोष्णं यत्पयः पिवेत् ।**
**एष व्यासकृतः कृच्छ्रः श्वपाकमपि शोधयेत् ॥१२८॥**

कैली गाईको दुहुँदादुहुँदैको तातो दूध पिई गरिने “कृच्छ्र” व्रतले चाण्डाल पनि शुद्ध हुन्छ भनी व्यास भन्दछन् ।

**निशायां भोजनं चैवं तज्ज्ञेयं नक्तमेव तु ।**
**अनादिष्टेषु पापेषु चान्द्रायण मथोदितम् ॥१२९॥**

रातमा मात्र भोजन गरिने “नक्त” व्रत हो । शास्त्रमा नबताइका पापको शुद्धिका लागि चान्द्रायण व्रत बस्नाले शुद्धि हुने कुरा बताइएको छ ।

**अग्निष्टोमादिभिर्यज्ञैरिष्टैर्द्विगुणदक्षिणैः ।**
**यत्फलं समवाप्नोति तथा कृच्छ्रैस्तपोधनः ॥१३०॥**

दोब्बर दक्षिणा दिइने अग्निष्टोम आदि यज्ञ गरेको फल कृच्छ्र व्रतहरु गर्नाले मिल्दछ ।

**वेदाध्यासरतःक्षांतो नित्यं शास्त्राण्यवेक्षयेत् ।**
**शौचाचार समायुक्तो गृहस्थोऽपि हि मुच्यते ॥१३१॥**

वेद पढ्नमा लागिपर्ने, क्षमाशील र नित्य शास्त्र अनुसारका शौच र आचरण गर्ने गृहस्थ नै भए पनि मुक्त हुन्छ ।

**उक्तमेतद्द्विजातीनां महर्षे ! श्रूयतामिति ।**
**अतः परं प्रवक्ष्यामि स्त्रीशूद्रपततानि च ॥१३२॥**

हे महान् ऋषिगण ! हजूरहरूले द्विजातिका धर्मका बारेमा सुन्नु भयो । यसपछि स्त्री र शूद्र पतित हुने कारणका बारेमा बताउँछु, सुन्नु होस् ।

**जपस्तपस्तीर्थयात्रा प्रव्रज्या मंत्रसाधनम् ।**
**देवताराधनं चैव स्त्रीशूद्रपतनानि षट् ॥१३३॥**

जप, तप, तीर्थाटन, सन्यास, मन्त्रसिद्धि र देवताको आराधना-यी छ कर्मले स्त्री र शूद्रलाई पतित बनाउँदछ ।

**जीवेद्भर्तरि या नारी उपोष्य व्रतचारिणी ।**
**आयुष्यं हरते भर्तुः सा नारी नरकं व्रजेत् ॥१३४॥**

जो स्त्री पति जीवित हुँदै उपवास गरी व्रत बस्दछे, त्यो स्त्रीले पतिको आयु हरण गर्छे र अन्तमा नरकमा पर्दछे ।

**तीर्थस्नानार्थिनी नारी पतिपादोदकं पिवेत् ।**
**शंकरस्यापि विष्णोर्वा प्रयाति परमं पदम् ॥१३५॥**

तीर्थस्नान चाहने नारीले पतिको गोडाको पानी खानू । यस्ती स्त्रीलाई शिव वा विष्णुको लोक प्राप्त हुन्छ ।

**जीवद्भर्तरि वामांगी मृते वापि सुदक्षिणे ।**
**श्राद्धे यज्ञे विवाहे च पत्नी दक्षिणतः सदा ॥१३६॥**

पति जीवित हुँदा वा मरेपछि पनि स्त्री देब्रेतिर र पति दाहिनेतिर बस्नु वा रहनु पर्दछ । तर, श्राद्ध, यज्ञ र विवाहमा पत्नी सदा (पतिको) दाहिनेतिर बस्नु पर्दछ ।

**सोमः शौचं ददौ तासां गन्धर्वाश्च तथाङ्गिराः ।**
**पावकः सर्वमेध्यत्वं मेध्यत्वं योषितां सदा ॥१३७॥**

चन्द्रमा, गन्धर्व र अङ्गिरा (बृहस्पति) ले उन(स्त्री)लाई शुद्धता र अग्निले सम्पूर्णरुपमा पवित्रता दिएका हुन्छन् त्यसैले स्त्री सदा पवित्र हुन्छन् ।

**जन्मना ब्राह्मणो ज्ञेयः संस्कारैर्द्विज उच्यते ।**
**विद्यया याति विप्रत्वं श्रोत्रियस्त्रिभिरेव च ॥१३८॥**

कुलमा भएको जन्मले ब्राह्मण र संस्कारले गर्दा द्विज भनिन्छ । विद्याले उसमा विप्रत्व प्राप्त हुन्छ एवं तीनै थोक भएपछि उ "श्रोत्रिय" भनी चिनिन्छ ।

**वेदशास्त्राण्यधीते यः शास्त्रार्थञ्च निबोधयेत् ।**
**तदासौ वेदवित् प्रोक्तो वचनंतस्य पावनम् ॥१३९॥**

वेद एवं शास्त्र पढेर त्यस अनुसार आचरण गर्नेलाई "वेदविद्" भनिन्छ र तिनको बचन पनि पवित्रदायक हुन्छ ।

**एकोऽपि वेदविद्धर्मं यं व्यवस्येद् द्विजोत्तमः ।**
**स ज्ञेयः परमो धर्मो नाज्ञानामयुतायुतैः ॥१४०॥**

वेद पढेको एउटा मात्र ब्राह्मण जुन धर्मको आचरण वा निर्णय गर्दछ, त्यही नै श्रेष्ठ धर्म हो । मूर्खहरुले लाखौं प्रयास वा कर्म गरेपनि त्यो धर्म हुँदैन ।

**पावका इव दीप्यन्ते तपहोमैर्द्विजोत्तमाः ।**
**प्रतिग्रहेण नश्यन्ति वारिणा इव पावकः ॥१४१॥**

जप र होम गर्ने उत्तम द्विज अग्निझैं चम्किन्छन् । प्रतिग्रह (दान) लिनाले द्विजोत्तमको तेज त्यसरी नै नष्ट हुन्छ जसरी पानीले आगोको तेज नष्ट हुन्छ ।

**तान्प्रतिग्रहजान्दोषान्प्राणायामैर्द्विजोत्तमाः ।**
**नाशयंति हि विद्वांसो वायुर्मेघानिवांबरे ॥१४२॥**

श्रेष्ठ ब्राह्मणको त्यो दान लिनाले प्राप्त भएको दोष प्राणायाम गर्नाले त्यसरी नै नाश गर्दछ, जसरी वायुले बादललाई नाश गर्दछ ।

**भुक्तमात्रो यदा विप्र आर्द्रपाणिस्तु तिष्ठति ।**
**लक्ष्मीर्बलं यशस्तेज आयुश्चैव प्रहीयते ॥१४३॥**

भोजन पछि आचमन गरी ब्राह्मण हात नपुछी चिसै राख्दछ भने उसका लक्ष्मी, बल, यश, तेज र आयु नष्ट हुन्छ ।

**यस्तु भोजनशालायामासनस्थ उपस्पृशेत् ।**
**तस्यान्नं नैव भोक्तव्यं भुक्त्वा चान्द्रायणं चरेत् ॥१४४॥**

भान्छामा खान बसेपछि मुख कुल्ला गर्ने ब्राह्मण (अगिल्तिर पस्किएको) अन्न खान अयोग्य हुन्छ । खाए उसले चान्द्रायण व्रत गर्नु पर्दछ ।

**पात्रोपरि स्थिते पात्रे यस्तु स्थाप्य उपस्पृशेत् ।**
**तस्यान्नं नैव भोक्तव्यं भुक्त्वा चान्द्रायणं चरेत् ॥१४५॥**

यदि कोही एउटा भाँडामाथि राखिएको अर्को भाँडाको जलले आचमन गर्दछ भने त्यसको अन्न नखानू, खाए चान्द्रायण व्रत गर्नु पर्दछ ।

**अश्रद्धया च यद्दत्तं विप्रेऽग्नौ दैविके क्रतौ ।**
**न देवास्तृप्तिमायान्ति दातुर्भवति निष्फलम् ॥१४६॥**

देवताका लागि भनेर गरिने यज्ञमा श्रद्धा बिना जेजति अग्निमा होम गरिन्छ त्यसले उसका देवता त तृप्त हुँदैनन् नै गरिएको दान पनि निष्फल हुन्छ ।

**हस्तं प्रक्षालयित्वा यः पिवेद्भुक्त्वा द्विजोत्तमः ।**
**तदन्नमसुरैर्भुक्तं निराशाः पितरो गताः ॥१४७॥**

उत्तमद्विजले चुठेर त्यही चुठेको पानी पिउँदछ भने त्यसले गर्ने श्राद्धको अन्न राक्षसले खाए सरह हुन्छ, पितृले पाउँदैनन् र निराश भएर जान्छन् ।

**नास्ति वेदात्परं शास्त्रं नास्ति मातुः परो गुरुः ।**
**नास्ति दानात् परं मित्रमिह लोके परत्र च ॥१४८॥**

यसलोक र परलोकमा वेदभन्दा ठूलो शास्त्र, आमाभन्दा ठूलो गुरु र दानभन्दा ठूलो मित्र छैन ।

**अपात्रेष्वपि यद्दत्तं दहत्यासप्तमं कुलम् ।**

**हव्यं देवा न गृह्णन्ति कव्यं च पितरस्तथा ॥१४९॥**

कुपात्रलाई दिइएको दानले सात पुस्ता नष्ट पार्दछ । यस्ता (कुपात्र) लाई दिइएको हव्य देवताले र कव्य पितृले ग्रहण गर्दैनन् ।

**आयसेन तु पात्रेण यदन्नमुपदीयते ।**
**श्वानविष्ठासमं भुंक्ते दाता च नरकं व्रजेत् ॥१५०॥**

फलामको भाँडाले पस्किएर दिइएको अन्न खानु कुकुरको गुहु खानु समान हुन्छ र दिने पनि नरकमा जान्छ ।

**पित्तलेन तु पात्रेण दीयमानं विचक्षणः ।**
**न दद्याद्वामहस्तेन शायसेन कदाचन ॥१५१॥**

बुद्धिमानले दिनयोग्य चिजहरु पस्केर दिँदा पित्तल वा फलामको भाँडामा राखेर र बायाँ हातले पस्केर कहिल्यै नदिनू ।

**मृण्मयेषु च पात्रेषु यः श्राद्धे भोजयेत्पितृन् ।**
**अन्नदाता च भोक्ता च व्रजेतां नरकं च तौ ॥१५२॥**

श्राद्धमा पितृलाई माटाका भाँडामा जसले खुवाउँदछ, खुवाउने र खाने ती दुवै नरकमा पर्दछन् ।

**अभावे मृण्मये दद्यादनुज्ञातस्तु तैर्द्विजैः ।**
**तेषां वचः प्रमाणं स्याद्यदन्नं चातिरिक्तकम् ॥१५३॥**

अरु भाँडा नभएमा श्राद्धको ब्राह्मणको अनुमतिले माटाको भाँडामा पस्किनु किनकि पवित्र ब्राह्मणका सत्यअसत्य सबै वचन प्रमाण हुन्छन् ।

**सौवर्णायसताम्रेषु कांस्यरौप्यमयेषु च ।**
**भिक्षादातुर्न धर्मोऽस्ति भिक्षुर्भुङ्क्ते तु किल्विषम् ॥१५४॥**

सुन, फलाम, तामा, काँस वा चाँदीको भाँडामा राखी भिक्षा दिए धर्म हुँदैन । यस्ता भाँडाले दिएको भिक्षा खाने भिक्षुकलाई पनि पाप लाग्दछ ।

**न च कांस्येषु भुंजीयादापद्यपि कदाचन ।**
**मलाशाः सर्व एवैते यतयः कांस्यभोजनाः ॥१५५॥**

आपद् पर्दा पनि यदि सन्यासी (भिक्षुक) काँसको भाँडामा खाना खान्छ भने यस्ता काँसका भाँडामा खाना खाने सबै सन्यासीले मल खाए सरह हुन्छ ।

**कांसकस्य च यत्पात्रं गृहस्थस्य तथैव च ।**
**कांस्यभोजी यतिश्चैव प्राप्नुयात् किल्विषं तयोः ॥१५६॥**

काँसको भाँडामा जुन अपवित्रता हुन्छ र गृहस्थमा जुन पाप हुन्छ, काँसको भाँडामा खाने सन्यासीले यी दुवै पाप बोक्दछ ।

**अत्राप्युदाहरन्ति-सौवर्णायताम्रेषु कांस्यरौप्यमयेषु च ।**
**भुंजन् भिक्षुर्न दुष्येत दुष्येच्चैव परिग्रहात् ॥१५९॥**

यस सम्बन्धमा अरु ऋषि पनि भन्दछन् कि-सुन, फलाम, तामा, काँस वा चाँदीका भाँडामा सन्यासीले भोजन गरिरहँदा, भोजनका कारण होइन कि यी पात्रमा दान लिएका कारण सन्यासी दूषित हुन्छ ।

**यतिहस्ते जलं दद्याद्भिक्षां दद्यात्पुनर्जलम् ।**
**तद्भैक्षं मेरुणा तुल्यं तज्जलं सागरोपमम् ॥१५८॥**

सन्यासीका हातमा पहिले जल दिनू, अनि भिक्षा दिनू र फेरी जल दिनू । यस्तो भिक्षा मेरु पर्वत समान र जल सागर समान हुन्छ ।

**चरेन्माधुकरीं वृत्तिमपि म्लेच्छकुलादपि ।**
**एकान्नं नैव भोक्तव्यं बृहस्पतिसमो यदि ॥१५९॥**

चाहे दाता बृहस्पति समान किन नहोस् एउटैको अन्न सन्यासीले नखानू । चाहे दिने कुनै म्लेच्छ नै किन नहोस् मौरीले धेरै फूलबाट रस जम्मा गरेजसरी सबैतिरबाट अन्न जम्मा गरेर खानू ।

**अनापदि चरेद्यस्तु सिद्धं भैक्षं गृहे वसन् ।**
**दशरात्रं पिवेद्वज्रमापस्तु त्र्यहमेव च ॥१६०॥**

आपद नपरी यदि कुनै सन्यासी घरमा बस्दै त्यहाँ बनाइएको भिक्षा खान्छ भने उसले दश रातसम्म वज्र पिउनू र तीन दिन जल पिउनू ।

**गोमूत्रेण तु संमिश्रं यावकं घृतपाचितम् ।**
**एतद्वज्रमिति प्रोक्तं भगवानत्रिरब्रवीत् ॥१६१॥**

गहुँत मिसाइएको र घिउमा पकाइएको जौको खानेकुरालाई भगवान् अत्रिले "वज्र" भनी बताएका छन् ।

**ब्रह्मचारी यतिश्चैव विद्यार्थी गुरुपोषकः ।**

**अध्वगःक्षीणवृत्तिश्च षडेते भिक्षुकाःस्मृताः ॥१६२॥**

ब्रह्मचारी, सन्यासी, विद्यार्थी, गुरुको पालनपोषण गर्ने, बटुवा र वेरोजगार (वा दरिद्र)-यी छ लाई भिक्षुक भनिएको छ ।

**षण्मासान्कामयेन्मर्त्यो गुर्विणीमेव च स्त्रियम् ।**
**आ दन्तजननादूर्ध्वमेष धर्मो न हीयते ॥१६३॥**

गर्भवती पत्नीसँग छ महिनासम्म र सुत्केरी पत्नीसँग बच्चाको दाँत उम्रेपछि सम्भोग गर्दा धर्म नष्ट हुँदैन ।

**ब्रह्महा प्रथमं चैव द्वितीये गुरुतल्पगः ।**
**तृतीयन्तु सुरापेयं चतुर्थं स्तेयमेव च ॥१६४॥**

सुत्केरीलाई पहिलो महिनामा सम्भोग गरे ब्रह्महत्याको, दोश्रो महिनामा गरे गुरुपत्नी गमनको, तेश्रो महिनामा गरे सुरा सेवनको र चौथो महिनामा गरे चोरीको दोष लाग्दछ ।

**पापानां चैव संसर्गः पञ्चमं पातकं महत् ॥१६५॥**

पाँचौं महिनामा गरे पापीहरूसँगको सङ्गतीको पाप लाग्दछ ।

**एषामेव विशुद्ध्यर्थं चरेत्कृच्छ्राण्यनुक्रमात् ।**
**त्रीणिवर्षाण्यकामश्चेद्ब्रह्महत्या पृथक्पृथक् ॥१६६॥**

यसको प्रायश्चितका लागि क्रमैले तीन वर्षसम्म कृच्छ्र व्रत गर्नू, यसो गर्दा ब्रह्महत्याको पाप पनि नष्ट हुन्छ, अरु चतुर्विध पाप पनि बेग्लाबेग्लै गरिने कृच्छ्र व्रतले नष्ट हुन्छन् ।

**अर्द्धं तु ब्रह्महत्यायाः क्षत्रियेषु विधीयते ।**
**षड्भागो द्वादशश्चैव विट्शूद्रयोस्तथा भवेत् ॥१६७॥**

क्षेत्रीयलाई आधा, वैश्यलाई छैटौं भाग र शूद्रलाई १२ औं भाग ब्रह्महत्याको पाप लाग्दछ ।

**त्रीन्मासान्नक्तमश्नीयाद्भूमौ शयनमेव च ।**
**स्त्रीघाती शुद्ध्यतेऽप्येवं चरेत्कृच्छ्राब्दमेव वा ॥१६८॥**

स्त्रीको हत्या गर्नेले तीन महिनासम्म रातमा मात्र भोजन (नक्तव्रत) गर्नू, जमिनमा सुत्नू र एक वर्षसम्म कृच्छ्र व्रत गर्नू, अनि शुद्ध हुन्छ ।

**रजकः शैलुषश्चैव वेणुकर्मोपजीवनः ।**
**एतेषां यस्तु भुङ्क्ते वै द्विजश्चान्द्रायणं चरेत्॥१६९॥**

धोबीको, नर्तकको तथा बाँसको काम गर्नेको अन्न खाने द्विजले चान्द्रायण व्रत गर्नु शुद्ध हुन्छ ।

**सर्वान्त्यजानां गमने भोजने संप्रवेशने ।**
**पराकेण विशुद्धिःस्याद्भगवानत्रिरब्रवीत्॥१७०॥**

सबै अन्त्यजसँग हिँडे, भोजन गरे वा सँगै बसे पराक व्रत गर्नाले शुद्ध हुन्छ भनेर अत्रीले भनेका छन् ।

**चाण्डालभाण्डे यत्तोयं पीत्वा चैव द्विजोत्तमः ।**
**गोमूत्रयावकाहारः सप्तषट्त्रिद्वयहान्यपि॥१७१॥**

चाण्डालको भाँडामा पानी पिउने द्विज सत्ताईस दिनसम्म गहुँत र जौ खाएपछि शुद्ध हुन्छ ।

**संस्पृष्टं यस्तु पक्वान्नमन्त्यजैर्वाऽप्युदक्यया ।**
**अज्ञानाद् ब्राह्मणोऽश्नीयात् प्राजापत्यार्द्धमाचरेत्॥१७२॥**

निम्न जातीय व्यक्ति वा परसरेकी स्त्रीले छोएको पक्वान्न नजानी खाने ब्राह्मणले आधा प्राजापत्य व्रत बस्नू ।

**चाण्डालान्नं यदा भुङ्क्ते चातुर्वर्ण्यस्य निष्कृतिः ।**
**चान्द्रायणं चरेद्विप्रः क्षत्रः सान्तपनं चरेत्॥१७३॥**

चाण्डालको अन्न खाएका चारवर्णको शुद्धता यसरी हुन्छ-ब्राह्मणले चान्द्रायण र छेत्रीले सान्तपन व्रत गर्नू ।

**षड्रात्रमाचरेद्वैश्यः पञ्चगव्यं तथैव च ।**
**त्रिरात्रमाचरेच्छूद्रो दानं दत्त्वा विशुद्धयति॥१७४॥**

वैश्यले छ दिनसम्म व्रत बसी पञ्चगव्य खानू र शूद्रले तीन दिनसम्म व्रत बसी पञ्चगव्य खानू र केही दान दिनू शुद्ध हुन्छन् ।

**ब्राह्मणो वृक्षमारूढश्चाण्डालो मूलसंस्पृशः ।**
**फलान्यत्ति स्थितस्तत्र प्रायश्चित्तं कथं भवेत्॥१७५॥**

ब्राह्मण रुखमा चढी फल खाइरहेको छ र चाण्डाल त्यो रुखको जरा छोइरहेको छ भने यस अवस्थामा प्रायश्चित के गरी हुन्छ ? ।

**ब्राह्मणान् समनुप्राप्य सवासाः स्नानमाचरेत् ।**
**नक्तभोजी भवेद्विप्रो घृतं प्राश्य विशुद्ध्यति ॥१७६॥**

ब्राह्मणहरूको आज्ञाले सचैल स्नान गरी एक दिन नक्तव्रत बस्नू अनि घिउ पिउनू, शुद्ध हुन्छ ।

**एकं वृक्षं समारूढश्चण्डालो ब्राह्मणस्तथा ।**
**फलान्यत्ति स्थितस्तत्र प्रायश्चित्तं कथं भवेत् ॥१७७॥**

ब्राह्मण र चाण्डाल एउटै रुखमा चढी फल खाइरहेका छन् भने त्यसको शुद्धि कसरी हुन्छ ? ।

**ब्राह्मणान् समनुज्ञाप्य सवासः स्नानमाचरेत् ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुद्ध्यति ॥१७८॥**

ब्राह्मणहरूको आज्ञाले सचैल स्नान गरी एक रातदिन उपवास बस्नु अनि पञ्चगव्य पिउनु शुद्ध हुन्छ ।

**एकशाखासमारूढश्चाण्डालो ब्राह्मणो यदा ।**
**फलान्यत्ति स्थितस्तत्र प्रायश्चित्तं कथं भवेत् ॥१७९॥**

एउटै हाँगामा बसेर चाण्डालसँग फल खाइरहेको ब्राह्मणको प्रायश्चित के गर्दा हुन्छ ? ।

**त्रिरात्रोपोषितो भूत्वा पञ्चगव्येन शुद्ध्यति ।**
**स्त्रियो म्लेच्छस्य संपर्काच्छुद्धिःसान्तपने तथा ॥१८०॥**

उसले तीन रात उपवास बसी पञ्चगव्य पिउनू, शुद्ध हुन्छ । म्लेच्छसँग संसर्ग भएकी स्त्री सान्तपन व्रतले शुद्ध हुन्छे ।

**तप्तकृच्छ्रं पुनः कृत्वा शुद्धिरेषाऽभिधीयते ॥१८१॥**

फेरी तप्तकृच्छ्र व्रतले यिनको शुद्धि हुन्छ ।

**स वर्तेत यथा भार्यां गत्वा म्लेच्छस्य संगताम् ।**
**सचैलं स्नानमादाय घृतस्य प्राशनेन च ॥१८२॥**

म्लेच्छसँग संसर्ग भएकी आफ्नी स्त्रीका साथ सुत्नेले सचैल स्नान गरी घिउ खानू र तप्तकृच्छ्र व्रत गर्नू शुद्ध हुन्छ ।

**संगृहितामपत्यार्थमन्यैरपि तथा पुनः ॥१८३॥**

सन्तानका खातिर यसो गर्नेले पनि यही विधि गर्नू ।

**चाण्डालम्लेच्छश्वपचकपालव्रतधारिणः ।**
**अकामतःस्त्रियो गत्वा पराकेण विशुद्ध्यति ॥१८४॥**

चाण्डाल, म्लेच्छ, श्वपच र कपालव्रतधारिणी स्त्रीलाई अज्ञानतामा गरिएको भोगमा पराकव्रतले शुद्धि हुन्छ ।

**कामतस्तु प्रसूतो वा तत्समो नात्र संशयः ।**
**स एव पुरुषस्तत्र गर्भो भुत्वा प्रजायते ॥१८५॥**

स्वेच्छाले उल्लेखित स्त्रिसँग सहवास गरी सन्तान उत्पन्न हुँदा ती सन्तान पनि ती स्त्री समानकै जातिका हुन्छन्, यसमा शङ्का छैन, किन कि पुरुष नै गर्भरूप भएर उत्पन्न हुन्छ ।

**तैलाभ्यक्तो घृताभ्यक्तो विण्मूत्रं कुरुते द्विजः ।**
**तैलाभ्यक्तो घृताभ्यक्तश्चाण्डालं स्पृशते द्विजः ॥**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुद्ध्यति ॥१८६॥**

द्विजले तेल वा घिउ दलेर ननुहाई मलमूत्र त्याग गरे वा तेल वा घिउ दलेर चाण्डाललाई छोए दिनरात उपवास बसी पञ्चगव्य खाए पछि शुद्धि हुन्छ ।

**केशकीटनखस्नायु अस्थिकण्टकमेव च ।**
**स्पृष्ट्वा नद्युदके स्नात्वा घृतं प्राश्य विशुद्ध्यति ॥१८७॥**

कपाल, कीरा, नङ, स्नायु, हाड र काँडा छोए नदीमा नुहाई घिउ खानाले शुद्ध हुन्छ ।

**मत्स्यास्थि जम्वुकास्थीनि नखशुक्तिकपर्दिकाः ।**
**हेमतप्तं घृतं पीत्वा तत्क्षणादेव शुद्ध्यति ॥१८८॥**

माछा वा स्यालको हाड, नङ, सिपी र कौडा(डी)लाई छोए (नुहाई) सुनशोधित घिउ खानाले तत्काल शुद्ध हुन्छ ।

**गोकुले कन्दुशालायां तैलचक्रेक्षुयन्त्रयोः ।**
**अमीमांस्यानि शौचानि स्त्रीणां च व्याधितस्य च ॥१८९॥**

गोठ, आरन र तेलको मिल वा उखुको कोलमा तथा स्त्री र रोगीले शुद्धताको विचार गर्नु पर्दैन ।

**न स्त्री दुष्यति जारेण ब्राह्मणो वेदकर्मणा ।**
**नाऽऽपो मूत्रपुरीषाभ्यां नाग्निर्दहति कर्मणा॥१९०॥**

(दैवी) जारले स्त्री दुषित हुन्न (सोमः प्रथमो विविदे गन्धर्वो विविद उत्तरः । तृतीयोऽग्निष्टे पतिस्तुरीयस्ते मनुष्यजाः ।ऋग्वेद-८।३।२७।४०) । वेदले बताएको कर्म (बलि आदि) गरेर ब्राह्मण दुषित हुन्न । मूत्रमल परेर (तलाउ नदी आदिको) पानी र अपवित्र वस्तु जलाएर अग्नि दूषित हुन्न ।

**पूर्वं स्त्रियः सुरैर्भुक्त्वाः सोमगन्धर्ववह्निभिः ।**
**भुञ्जते मानवाः पश्चान्न ता दुष्यन्ति कर्हिचित्॥१९१॥**

पहिले चन्द्रमा, गन्धर्व र अग्नि आदिले भोगेपछि मानवले भोग्ने हुनाले स्त्री कहिल्यै केही गरे पनि (मानसादि सामान्य पाप गरेर) दुषित हुन्न ।

**असवर्णस्तु यो गर्भःस्त्रीणां योनौ निषेच्यते ।**
**अशुद्धा सा भवेन्नारी यावद्गर्भं न मुंचति॥१९२॥**

भिन्न जातको जुन गर्भ स्त्रीको योनीमा सिञ्चित गरिन्छ ती नारी त्यो गर्भ नत्यागे (नजन्माएसम्म) सम्म अशुद्ध हुन्छिन् ।

**विमुक्ते तु ततः शल्ये रजश्चापि प्रदृश्यते ।**
**तदा सा शुद्ध्यते नारी विमलं काञ्चनं यथा॥१९३॥**

गर्भ त्यागी (जन्माई) दुःखी भई रजस्वला पनि भएपछि त निर्मल सुनझैं नारी शुद्ध हुन्छे ।

**स्वयं विप्रतिपन्ना या यदि वा विप्रतारिता ।**
**बलान्नारी प्रभुक्ता वा चौरभुक्ता तथाऽपि वा॥१९४॥**

आफैं कसैका समीपमा (अचानक) पुगेर, कसैले छलेर, बलजफ्ती गरेर वा चोरेर भोगिएकी ...।

**न त्याज्या दूषिता नारी न कामोऽस्या विधीयते ।**
**ऋतुकाल उपासीत पुष्पकालेन शुद्ध्यति॥१९५॥**

दूषित (सम्झिइने) स्त्रीलाई त्याग नगर्नू किनकी यो कुरा स्त्रीको इच्छाले गरिएको हुँदैन । ऋतुकाल आएर रगत गएपछि उ शुद्ध (गमन योग्य) हुन्छे, यसअघि संसर्ग नगर्नू ।

**रजकश्चर्मकारश्च नटी बुरुड एव च ।**

**कैवर्तमेदभिल्लाश्च सप्तैते अन्त्यजाः स्मृताः ॥१९६॥**

धोबी, चर्मकार, नर्तक, बाँसकर्मी, माझी, सुरा बनाउने र भिल्ल-यी सात अन्त्यज हुन् ।

**एषां गत्वा स्त्रियो मोहाद्भुक्त्वा च प्रतिगृह्य च ।**
**कृच्छ्राब्दमाचरेज्ज्ञानादज्ञानादेव तद्द्वयम् ॥१९७॥**

अनजानमा यी (अन्त्यज) स्त्रीलाई गमन गरे, यिनको अन्न खाए वा यिनबाट दान लिए दुई वर्ष र जानाजान लिए एक वर्ष कृच्छ्र व्रत गर्नू ।

**सकृद्भुक्त्वा तु या नारी म्लेच्छैर्वा पापकर्मभिः ।**
**प्राजापत्येन शुद्ध्येत ऋतुप्रस्रवणेन तु ॥१९८॥**

अन्त्यज वा पापकर्मीबाट एक पटक भोगिएकी स्त्री प्राजापत्य व्रत गरेर रजस्वला भएपछि शुद्ध हुन्छे ।

**बलोद्धृता स्वयं वाऽपि परप्रेरितया यदि ।**
**सकृद्भुक्त्वा तु या नारी प्रजापत्येन शुद्ध्यति ॥१९९॥**

बलपूर्वक, स्वेच्छाले वा लहैलहैमा लागेर एक पटक भोगिएकी स्त्री प्राजापत्य व्रतले शुद्ध हुन्छे ।

**प्रारब्धदीर्घतपसां नारीणां यद्रजो भवेत् ।**
**न तेन तद्व्रतं तासां विनश्यति कदाचन ॥२००॥**

जुन स्त्रीले धेरै दिनको तप (व्रत) गर्न शुरु गरेकी छे, रजस्वलाका कारण तिनको त्यो व्रत कहिल्यै नष्ट (वा भङ्ग) हुँदैन ।

**मद्यसंस्पृष्टकुम्भेषु यत्तोयं पिबति द्विजः ।**
**कृच्छ्रपादेन शुद्ध्येत पुनः संस्कारमर्हति ॥२०१॥**

मदिराले छोएको भाँडाले पानी पिउने द्विजले पादकृच्छ्र व्रत गरी शुद्ध हुन्छ र पुनः संस्कारका लागि योग्य हुन्छ ।

**अन्त्यजस्य तु ये वृक्षा बहुपुष्पफलोपगाः ।**
**उपभोग्यास्तु ते सर्वे पुष्पेषु च फलेषु च ॥२०२॥**

अन्त्यजका धेरै फलेका वा फुलेका फलफूलका बोटका फल र फूल सबैका लागि उपभोग गर्न योग्य हुन्छ ।

**चण्डालेन तु संस्पृष्टं यत्तोयं पिबति द्विजः ।**
**कृच्छ्रपादेन शुद्ध्येत आपस्तम्बोऽब्रवीन्मुनिः ॥२०३॥**

जुन् ब्राह्मण चाण्डालले छोएको जल पिउँदछ, उ "पादकृच्छ्र" व्रतले शुद्ध हुन्छ भनी आपस्तम्ब मुनिले बताएका छन् ।

**श्लेष्मोपानहविण्मूत्रस्त्रीरजोमद्यमेव च ।**
**एभिः संदूषिते कूपे तोयं पीत्वा कथं विधिः ॥२०४॥**

थुक, जुत्ता, मल, मूत्र, स्त्री-रज र मदिरा परी दुषित भएको कुवाको जल पिए के गरे प्रायश्चित हुन्छ ? ।

**एकं द्व्यहं त्र्यहं चैव द्विजातीनां विशोधनम् ।**
**प्रायश्चितं पुनश्चैव नक्तं शूद्रस्य दापयेत् ॥२०५॥**

द्विजातीले क्रमशः एक, दुई र तीन दिन व्रत बस्नू, शूद्रले नक्तव्रत गर्नू, शुद्ध हुन्छ ।

**सद्यो वान्ते सचैलं तु विप्रस्तु स्नानमाचरेत् ।**
**पर्युषिते त्वहोरात्रमतिरिक्ते दिनत्रयम् ॥२०६॥**

आलो वान्ता छोए सवस्त्र नुहाउनू, एक दिनको बासी वान्ता छोए एक दिनरात र धेरै पुरानो बान्ता छोए तीन दिन उपवास बस्नू ।

**शिरःकण्ठोरुपादांश्च सुरया यस्तु लिप्यते ।**
**दशषट्त्रितयैकाहं चरेदेवमनुक्रमात् ॥२०७॥**

टाउको, घाँटी, तिघ्रा र गोडामा सुरा दलिऐ क्रमशः दश, छ, तीन र एक दिन उपवास बस्नू ।

**अत्राप्युदाहरन्ति-**यससम्बन्धमा भनिएको छ कि-

**प्रमादान्मद्यपः सुरां सकृत्पीत्वा द्विजोत्तमः ।**
**गोमूत्रयावकाहारो दशरात्रेण शुद्ध्यति ॥२०७॥**

प्रमादमा मदिरा पिउने द्विजोत्तमले एक पटक मदिरा पिए दश रातसम्म गहुँत मिसाइएको जौ खानाले शुद्ध हुन्छ ।

**मद्यपस्य निषादस्य यस्तु भुङ्क्ते द्विजोत्तमः ।**

**न देवा भुञ्जते तत्र न पिवन्ति हविर्जलम्॥२०८॥**

मदिरा पिउनेका घरमा वा निषाद् कहाँ खानेको हवि र जल देवताले ग्रहण गर्दैनन् ।

**चितिभ्रष्टा तु या नारी ऋतुभ्रष्टा च व्याधितः ।**
**प्राजापत्येन शुद्ध्येत ब्रह्मणान् भोजयेद्दश ॥२०९॥**

मतिभ्रष्ट र रोगले रजस्वला भ्रष्ट भएकी स्त्री, प्राजापत्य व्रत र दश ब्राह्मण भोजन गराएर शुद्ध हुन्छे ।

**ये च प्रव्रजिता विप्राः प्रव्रज्याग्निजलावहाः ।**
**अनाशकान्निवर्तन्ते चिकीर्षन्ति गृहस्थितिम्॥२१०॥**
**धारयेत्त्रीणि कृच्छ्राणि चान्द्रायणमथापि वा ।**
**जातिकर्मादिकं प्रोक्तं पुनः सस्कारमर्हति ॥२११॥**

जो ब्राह्मणले सन्यासधर्म ग्रहण गरी आफ्नो मृत्युको सङ्कल्प गरी अग्नि वा जलमा प्रवेश गरि सकेका छन् र यदि गर्दा पनि जीवन नष्ट भएको छैन, उ फेरी गृहस्थ हुन चाहन्छ भने उसले तीन प्राजापत्य, चान्द्रायण र जातकर्म आदि सबै संस्कार गर्नुपर्दछ ।

**न शौचं नोदकं नाश्रु नापवादानुकम्पने ।**
**ब्रह्मदण्डहतानां तु न कार्यं कटधारणम् ॥२१२॥**
**स्नेहं कृत्वा भयादिभ्यो यस्त्वेतानि समाचरेत् ।**
**गोमूत्रयावकाहारः कृच्छ्रमेकं विशोधनम्॥२१३॥**

ब्राह्मणको श्राप परी मरेकाको आशौच बार्न, जलदान गर्न, आँशु बगाउन, मलाम जान र लाश बोक्न हुँदैन । उप्रति दया वा माया देखाउँदै दुःख गर्न वा ओछ्यान छाडी काठमाथि सुत्न (कटधारण) उचित हुन्न । यदि कसैले भित्रै देखिको माया वा उसका सन्तानको डर वा नम्रताले यस्ताको यी कर्म गरे गहुँत मिसाइएको जौ खाई एक कृच्छ्र व्रत गर्नू , शुद्ध हुन्छ ।

**वृद्धः शौचस्मृतेर्लुप्तः प्रत्याख्यातभिषक्क्रियः ।**
**आत्मानं घात्मयेद्यस्तुभृग्वग्न्यनशनांबुभिः ॥२१४॥**
**तस्य त्रिरात्रमाशौचं द्वितीये त्वस्थिसञ्चयम् ।**
**तृतीये तूदकं कृत्वा चतुर्थे श्राद्धमाचरेत्॥२१५॥**

जो मानिस बूढो भएर शौच आदिको स्मरण शक्ति गुमाएको छ अर्थात् जसलाई शौचाशौचको ज्ञान छैन, वैद्यले जसको उपचार समेत गर्न छाडि दिएका छन्, जो अग्लो ठाउँबाट हाम फालेर वा आगोमा जलेर वा अन्न त्यागेर वा जलमा डुबेर आत्महत्या गर्दछ त्यस्ताका छोराहरूलाई तीन रातको आशौच लाग्दछ । यस्ताको दोश्रो दिन नै अस्थि-सञ्चयन, तेश्रो दिन जलदान र चौथो दिन श्राद्ध गर्नुपर्दछ ।

**यस्यैकाऽपि गृहे नास्ति धेनुर्वत्सानुचारिणी ।**
**मङ्गलानि कुतस्तस्य कुतस्तस्य तमःक्षयः ॥२१६॥**

जसको घरमा एउटा पनि सवत्सा गाई छैन, त्यो घरको मङ्गल र अन्धकार नास कसरी हुन सक्दछ र ! ।

**अतिदोहातिवाहाभ्यां नासिकाभेदनेन वा ।**
**नदीपर्वतसंरोधे मृते पादोनमाचरेत् ॥२१७॥**

धेरै दूध दोहेर, धेरै जोतेर, नाथ्री छेडेर र नदी वा पर्वतमा रोकेर पशु मरे, मारेको चौथाई प्रायश्चित गर्नू ।

**अष्टागवं धर्महलं षड्गवं व्यावहारिकम् ।**
**चतुर्गवं नृशंसानां द्विगवं गवबध्यकृत् ॥२१८॥**
**द्विगवं वाहयेत्पादं मध्याह्नं तु चतुर्गवम् ।**
**षड्गवं तु त्रिपादोक्तं पूर्णाहस्त्वष्टभिःस्मृतम् ॥२१९॥**

आठ गोरु नार्नुलाई धर्म-हल, छ गोरु नार्नु व्यवहार-हल, चार गोरु नार्नु हत्यारा-हल र दुई गोरु नार्नु गोरु मार्ने हल हो । दुई गोरुको हलो एक चौथँई दिन, चार गोरुको हलो दुई चौथाई दिन, छ गोरुको हलो तीन चौथाई दिन र आठ गोरुको हलो दिनभर जोत्नू ।

**काष्ठलोष्टशिलागोघ्नः कृच्छ्रं सान्तपनं चरेत् ।**
**प्राजापत्यं चरेन्मृत्सा अतिकृच्छ्रन्तु आयसैः ॥२२०॥**

दाउरा (चिर्पट), माटाको डल्लो र ढुङ्गाले गाई मारे सान्तपन कृच्छ्र गर्नू । मुड्कीले हानी मारे प्राजापत्य व्रत र फलामका लौरो आदिले हिर्काएर मारे अतिकृच्छ्र व्रत गर्नू ।

**प्रायश्चित्तेन तच्चीर्णे कुर्याद् ब्राह्मणभोजनम् ।**
**अनुडुत्सहितां गां च दद्याद्विप्राय दक्षिणाम् ॥२२१॥**
यसपछि ब्राह्मणलाई भोजन गराई बाच्छोसहित एक गाई दान गर्नू ।

**शरभोष्ट्रहयान्नागानसिंहशार्दूलगर्दभान् ।**
**हत्वा च शूद्रहत्यायाः प्रायश्चित्तं विधीयते ॥२२२॥**

शरभ (एक आठखुट्टे पौराणिक पशु), ऊँट, घोडा, हात्ती, सिंह, बाघ र गधाको हत्या गरे शूद्र हत्याको प्रायश्चित गर्नू ।

**मार्जारगोधानकुलमण्डूकांश्चप तत्त्रिणः ।**

**हत्वा त्र्यहं पिबेत्क्षीरं कृच्छ्रं वापादिकं चरेत् ॥२२३॥**

बिरालो, गोही, न्याहुरीमुसो, भ्यागुतो र पंक्षीको हत्याको प्रायश्चित गर्न तीन दिनसम्म दूध पिउनू र हत्यामा गरिने पादकृच्छ्र व्रत गर्नू ।

**चाण्डालस्य च संस्पृष्टं विण्मूत्रस्पृष्टमेव वा ।**
**त्रिरात्रेण विशुद्धं हि भुक्तोच्छिष्टं समाचरेत् ॥२२४॥**

चाण्डालले छोएको वा मलमूत्र परेको वा आफ्नै जूठो खाएमा तीन रात शुद्ध भई जुठो खाएको बेलामा गर्नुपर्ने प्रायश्चित गर्नू ।२२४।

**वापीकूपतडागानां दूषितानां च शोधनम् ।**
**उद्धरेत्षट्शतं पूर्णं पञ्चगव्येन शुद्ध्यति ॥२२५॥**

अशुद्ध पदार्थले दूषित कुवा, पँधेरो, तलाउबाट छ सय गाग्रो पानी निकाल्नू र पञ्चगव्य हाल्नू ।

**अस्थिचर्मावसिक्तेषु खरश्वानादिदूषिते ।**
**उद्धरेदुदकं सर्वं शोधनं परिमार्जनम् ॥२२६॥**

हाडछाला परेमा वा गधा, कुकुरले फोहोर गरेमा सबै पानी निकाली सफा गर्नू ।

**गोदोहने चर्मपुटे च तोयं यन्त्राकारे कारुकशिल्पिहस्ते ।**
**स्त्रीबालवृद्धाचरितानि यान्यप्रत्यक्षदृष्टानि शुचीनि तानि ॥२२७॥**

गोदोहनीको, छालाको भाँडाको, यन्त्रको, कालिगढको हातको, स्त्री-बालक-वृद्धले छोएको र आफूले शुद्धअशुद्ध नदेखेको जल शुद्ध हुन्छ ।

**प्राकाररोधे विषमप्रदेशे सेनानिवेशे भवनस्य दाहे ।**
**अवास्ययज्ञेषु महोत्सवेषु तेष्वैव दोषा न विकल्पनीयाः ॥२२८॥**

अवरोधमा, सङ्कटमा, सेवारत हुँदा, भवनमा आगो लागेको बेलामा, यज्ञ शुरु भएपछि र ठूला महोत्सवमा जलको दोषको शङ्का नगर्नू ।

**प्रपास्वरण्ये घटकस्य कूपे द्रोण्यां जलं कोशविनिर्गतं च ।**
**श्वपाकचंडालपरिग्रहे तु पीत्वा जलं पञ्चगव्येन शुद्धिः ॥२२९॥**

पानीपौवा, वन, घटकको कुवा, कुवा नजिकै राखिएको घ्याम्पोको र पोखरीबाट निक्लेको पानी शुद्ध हुन्छ । श्वपाक र चण्डालले बनाएको कुवा आदिको पानी पिए पञ्चगव्यले शुद्धि हुन्छ ।

**रेतोविण्मूत्रसंस्पृष्टं कौपं यदि जलं पिवेत् ।**
**त्रिरात्रेणैव शुद्धिःस्यात्कुम्भे सान्तपनं तथा ॥२३०॥**

वीर्य र मलमूत्र परेको कुवाको जल पिए तीन रातमा शुद्ध हुन्छ भने यी कुरा मिसिएको गाग्रोको जल पिए सान्तपन व्रतले शुद्ध हुन्छ ।

**क्लिन्नभिन्नशवं यत्स्यादज्ञानाच्च तथोदकम् ।**
**प्रायश्चित्तं चरेत्पीत्वा तप्तकृच्छ्रं द्विजोत्तमः ॥२३१॥**

शवले दूषित जल अज्ञानले पिउने द्विजोत्तमले तप्तकृच्छ्र व्रत बसी प्रायश्चित गर्नू ।

**उष्ट्रीक्षीरं खरीक्षीरं मानुषीक्षीरमेव च ।**
**प्रायश्चित्तं चरेत्पीत्वा तप्तकृच्छ्रं द्विजोत्तमः ॥२३२॥**

ऊँटनी, गधैनी र स्त्रीको दूध खाएका उत्तम द्विजले तप्तकृच्छ्र व्रत बसी प्रायश्चित गर्नू ।

**वर्णवाह्येन संस्पृष्ट उच्छिष्टस्तु द्विजोत्तमः ।**
**पञ्चरात्रोषितो भूत्वा पञ्चगव्येन शुद्ध्यति ॥२३३॥**

जुठोमुखका उत्तम द्विजलाई चार वर्ण भन्दा बाहेककाले छोएमा पाँच रात उपवास बसी पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**शुचि गोतृप्तिकृत्तोयं प्रकृतिस्थं महीगतम् ।**
**चर्मभाण्डस्थधाराभिस्तथा यन्त्रोद्धृतं जलम् ॥२३४॥**

गाईको तीर्खा मेट्न पुग्ने जमिनको जल, छालाको भाँडाको जलको धारो र यन्त्रबाट निकालिने जल शुद्ध हुन्छ ।

**चाण्डालेन तु संस्पृष्टे स्नानमेव विधीयते ।**
**उच्छिष्टस्तु च संस्पृष्टस्त्रिरात्रेणैव शुद्ध्यति ॥२३५॥**

चाण्डाललाई त्यत्तिकै छोए नुहाउनाले र जुठोमुख हुँदा छोए तीन रातमा शुद्धि हुन्छ ।

**आकराद्गतवस्तूनि नाशुचीनि कदाचन ।**

**आकराः शुचयः सर्वे वर्जयित्वा सुरालयम्॥२३६॥**

खानीबाट निकालिने वस्तु कहिल्यै अशुद्ध हुँदैन, सुरा बाहेक सबै खानीहरु शुद्ध हुन्छन् ।

**भृष्टाभृष्टा यवाश्चैव तथैव चणकाः स्मृताः ।**
**खर्जूरं चैव कर्पूरमन्यद्भृष्टतरं शुचिः॥२३७॥**

भुटेको जौ र चना शुद्ध हुन्छ, खजुरको फल र कपुर तथा अन्य भुटिएका पदार्थ पनि शुद्ध हुन्छन् ।

**अमीमांस्यानि शौचानि स्त्रीभिराचरितानि च ।**
**गोकुले कंदुशालायां तैलयन्त्रेक्षुयन्त्रयोः॥२३८॥**

स्त्रीले गरेका कार्यमा, गाईको कुलमा, मिठाई पसलमा, तेलपेल्ने मिलमा र उखुको कोलमा शौचाशौचको विचार गर्नु उपयुक्त हुन्न ।

**अदुष्टाः सततं धारा वातोद्धूताश्च रेणवः॥२३९॥**

अनवरत बगिरहेको पानीको धारा र हावाले उडाएको धूलो सधैं पवित्र हुन्छ ।

**बहूनामेक लग्नानामेकश्चेदशुचिर्भवेत् ।**
**अशौचमेकमात्रस्य नेतरेषां कथञ्चन॥२४०॥**

धेरै जना एउटै वस्त्र आदिमा बसेका अवस्थामा कुनै एक व्यक्ति अशुद्ध हुँदा अरु व्यक्ति कुनै हालतमा पनि अशुद्ध हुँदैनन् ।

**एकपंक्त्युपविष्टानां भोजनेषु पृथक्पृथक् ।**
**यद्येको लभते नीलीं सर्वे तेऽशसचय स्मृताः॥२४१॥**

एकै लहरमा बेग्लाबेग्लै खाना खाइरहेका मानिसमध्ये एउटाको शरीरमा नील (नीर) को स्पर्श भए त्यो लहरमा बस्ने सबै मानिसलाई अशुद्धि लाग्दछ ।

**यस्य पट्टे पट्टसूत्रे नीलीरक्तो हि दृश्यते ।**
**त्रिरात्रं तस्य दातव्यं शेषाश्चैवोपवासिनः॥२४२॥**

जुन मानिसको शरीरमा नीलो रङको वस्त्र देखिन्छ उसले तीन र एक दिन उपवास बस्नू ।

**आदित्येस्तमिते रात्रावस्पृश्यं स्पृशते यदि ।**

**भगवन्केन शुद्धिः स्यात्ततो ब्रूहि तपोधन ॥२४३॥**

हे भगवान् ! हे तपोधन ! सूर्यास्त पछि रातमा स्पर्श गर्न नहुने स्पर्श भए त्यसको शुद्धि के गरी हुन्छ ?

**आदित्येस्तमिते रात्रौ स्पृशन् हीनं दिवा जलम् ।**
**तेनैव सर्व शुद्धिःस्यात् शवस्पृष्टं तु वर्जयेत् ॥२४४॥**

सूर्यास्त पछि रातमा छुन नहुने कुरा छोइएमा दिउसो लेराएकै शुद्धजलले शुद्धिहुन्छ तर लाश छोएको हुँदैन ।

**देशंकालं च यः शक्तिं पापं चावेक्षयेत्ततः ।**
**प्रायश्चित्तं प्रकल्प्यं स्याद्यस्य चोक्ता न निष्कृतिः ॥२४५॥**

शास्त्रमा नबताइएका पापको प्रायश्चित देश, समय, शक्ति र पापको प्रकृति हेरी निर्धारण गर्नू ।

**देवयात्राविवाहेषु यज्ञप्रकरणेषु च ।**
**उत्सवेषु च सर्वेषु अस्पृष्टास्पृष्टिर्नविद्यते ॥२४६॥**

तीर्थयात्रा, विवाह, यज्ञप्रकरण र सवै उत्सवहरुमा छुन हुने-नहुने भनी विचार गर्नु पर्दैन ।

**आरनालं तथा क्षीरं कन्दुकं दधिसक्तवः ।**
**स्नेहपक्वं च तक्रं च शूद्रस्यापि न दूष्यति ॥२४७॥**

चना आदिले बनेका खजूरी, दूध, पानीको प्रयोग नगरी तयार पारिएका खाने कुरा, दही, सातु, घिउतेलमा पकाइएका चिज र मोही शूद्रका पनि दूषित हुँदैन ।

**आर्द्रमांसं घृतं तैलं स्नेहाश्च फलसंभवाः ।**
**अन्त्यभाण्डस्थिता एते निष्क्रान्ताःशुद्धिमाप्नुयुः ॥२४८॥**

काँचो मासु, घिउ, तेल र फलफूलको रस (चिउली आदिको) अन्त्यजातिको भाँडामा भएपनि त्यसबाट निकाले पछि शुद्ध हुन्छ ।

**अज्ञानात्पिवते तोयं ब्राह्मणः शूद्रजातिषु ।**
**अहोरात्रोषितः स्नात्वा पञ्चगव्येन शुद्ध्यति ॥२४९॥**

अज्ञानमा शूद्रको जल पिउने बाहुन, एक दिनरात उपवास बसी नुहाएर पञ्चगव्य खानाले शुद्ध हुन्छ ।

**आहिताग्निस्तु यो विप्रो महापातकवान् भवेत् ।**

**अप्सु प्रक्षिप्य पात्राणि पश्चादग्निं विनिर्दिशेत् ॥२५०॥**

जो अग्निहोत्री ब्राह्मण महापापी हुन्छ त्यसले होमका पात्रहरु जलमा सेलाई फेरी अग्निहोत्र ग्रहण गर्नू ।

**योऽगृहीत्वा विवाहाग्निं गृहस्थ इति मन्यते ।**
**अन्नं तस्य न भोक्तव्यं वृथापाको हि सःस्मृतः ॥२५१॥**

जो विवाह अग्नि नलिई गृहस्थ भएको हुन्छ, त्यसको अन्न नखानू, त्यो वृथापाक हुन्छ भनी बताइएको छ ।

**वृथापाकस्य भुञ्जानः प्रायश्चित्तं चरेद्द्विजः ।**
**प्राणानप्सु त्रिराचम्य घृतं प्राश्य विशुद्ध्यति ॥२५२॥**

वृथापाकको अन्न खानेले प्रायश्चितका लागि पानी भित्र बसी तीन पटक प्राणायाम गर्नू र घिउ खानू, शुद्ध हुन्छ ।

**वैदिके लौकिके वाऽपि हुतोच्छिष्टे जले क्षितौ ।**
**वैश्वदेवं प्रकुर्वीत पञ्चसूनापनुत्तये ॥२५३॥**

पञ्चपाप हटाउनका लागि वैदिक वा लौकिक अग्निमा वा जलमा वा भूमिमा बलि वैश्वदेव गर्नू ।

**कनीयान्गुणवांश्चैव श्रेष्ठश्चेन्निर्गुणो भवेत् ।**
**पूर्वं पाणिं गृहीत्वा च गृह्याग्निं धारयेद् बुधः ॥२५४॥**

दाजु निर्गुणी र भाई गुणी छ भने दाजुभन्दा पहिले विवाह गरी भाईले गृह्यअग्नि धारण गर्नू ।

**ज्येष्ठश्चेद्यदि निर्दोषो गृह्णात्यग्निं यवीयकः ।**
**नित्यं नित्यं भवेत्तस्य ब्रह्महत्या न संशयः ॥२५५॥**

दाजु निर्दोष हुँदाहुँदै अग्निहोत्र ग्रहण गर्ने भाईलाई प्रत्येक दिन ब्रह्महत्या गरेको पाप लाग्छ, यसमा शङ्का छैन ।

**महापातकिसंस्पृष्टः स्नानमेव विधीयते ।**
**संस्पृष्टस्य यदा भुङ्क्ते स्नानमेव विधीयते ॥२५६॥**

महापापीलाई छोएमा वा महापापीले छोएको खाना खाएमा स्नान गर्नाले शुद्ध हुन्छ ।

**पतितैः सह संसर्गं मासार्द्धं मासमेव वा ।**

**गोमूत्रयावकाहारो मासार्धेन विशुद्ध्यति ॥२५७॥**

पतित व्यक्तिको एक महिना वा पन्ध्र दिन संसर्ग गर्नेले पन्ध्र दिनसम्म गहुँत र जौ खानू, शुद्ध हुन्छ ।

**कृच्छ्रार्द्धं पतितस्यैव सकृद्भुक्त्वा द्विजोत्तमः ।**
**अविज्ञानाच्च तद्भुक्त्वा कृच्छ्रं सान्तपनं चरेत् ॥२५८॥**

पतितको अन्न एक पटक खाए कृच्छ्रार्द्ध र अनजानमा खाए सान्तपन कृच्छ्र व्रतले शुद्धि हुन्छ ।

**पतितान्नं यदा भुक्तं भुक्तं चण्डालवेश्मनि ।**
**मासार्धन्तु पिवेद्वारि इति शातातपोऽब्रवीत् ॥२५९॥**

पतितको अन्न खाएमा वा चाण्डालको घरमा खाए पन्ध्र दिनसम्म पानीमात्र पिउनु भनी शातातपले भनेका छन् ।

**गोब्राह्मणहतानां च पतितानां तथैव च ।**
**अग्निना नच संस्कारः शंखस्य वचनं यथा ॥२६०॥**

गाई र ब्राह्मणद्वारा मारिने तथा पतित व्यक्तिको अग्निले दाहसंस्कार नगर्नू भनी शंख ऋषिले भनेका छन् ।

**यश्चाण्डालीं द्विजो गच्छेत् कथंचित् काममोहितः ।**
**त्रिभिः कृच्छ्रैर्विशुद्ध्येत प्राजापत्यानुपूर्वशः ॥२६१॥**

द्विजले कामले मोहित भई चाण्डाल्नीलाई सम्भोग गरे प्राजापत्य पछि तीन वटा कृच्छ्र व्रत गर्नाले शुद्ध हुन्छ ।

**पतिताच्चान्नमादाय भुक्त्वा वा ब्राह्मणो यदि ।**
**कृत्वा तस्य समुत्सर्गमतिकृच्छ्रं विनिर्दिशेत् ॥२६२॥**

ब्राह्मणले पतितको अन्न लिएमा वा खाएमा त्यो अन्न त्याग गरी अतिकृच्छ्र व्रत गर्नू भनी बताइएको छ ।

**अन्त्यहस्तात्तु विक्षिप्तं काष्ठलोष्टतृणानि च ।**
**न स्पृशेत्तु तथोच्छिष्टमहोरात्रं समाचरेत् ॥२६३॥**

अन्त्यजले फालेको काठ, डल्ला र घाँस वा तिनको जुठो छुनेले एक दिनरात व्रत गर्नू ।

**चण्डाल पतितं म्लेच्छं मद्यभाण्डं रजस्वलाम् ।**

**द्विजःस्पृष्ट्वा न भुञ्जीत भुञ्जानो यदि संस्पृशेत्॥२६४॥**

चाण्डाल, पतित, म्लेच्छ, मदिराको भाँडो र रजस्वलालाई छुने द्विजले भोजन नगर्नू । भोजन गर्दागर्दै छोए ...।

**अतः परं न भुञ्जीत त्यक्त्वान्नं स्नानमाचरेत् ।**
**ब्राह्मणैः समनुज्ञातस्त्रिरात्रमुपवासयेत्॥**
**सघृतं यावकं प्राश्य व्रतशेषं समापयेत्॥२६५॥**

त्यसपछि नखानु, त्यो अन्न त्यागी नुहाउनू र ब्राह्मणको आज्ञा लिई तीन रात उपवास बस्नू, घिउ र जौ खाई बाँकी व्रत टुङ्ग्याउनू ।

**भुञ्जानः संस्पृशेद्यस्तु वायसं कुक्कुटं तथा ।**
**त्रिरात्रेणैव शुद्धिः स्यादथोच्छिष्टस्त्वहेन तु॥२६६॥**

खाँदाखाँदै कौवा वा कुखुरा छोए तीन रातमा र जुठोमुख हुँदा छोए एक रातमा शुद्ध हुन्छ ।

**आरुढो नैष्ठिके धर्मे यस्तु प्रच्यवते पुनः ।**
**चान्द्रायणं चरेन्मासमिति शातातपोऽब्रवीत्॥२६७॥**

आजीवन गुरुकुलमा ब्रह्मचारी भई बस्नेले त्यो नैष्ठिक धर्म छोडे एक महिना चान्द्रायण गर्नु भनी शातातपले बताएका छन् ।

**पशुवेश्यभिगमने प्राजापत्यं विधीयते ।**
**गवां गमने मनुप्रोक्तं व्रतं चान्द्रायणं चरेत्॥२६८॥**

पशु र वेश्या गमन गरे प्राजापत्य व्रत गर्नू । गौगमनमा मनुले भनेको चान्द्रायण व्रत गर्नू ।

**अमानुषीषु गोवर्जमुदक्यायामयोनिषु ।**
**रेतःसिक्त्वा जले चैव कृच्छ्रं सान्तपनं चरेत्॥२६९॥**

निम्न जातमा,  गाई बाहेक पशुमा र जलमा विर्यपात गर्नेले कृच्छ्र सान्तपन व्रत बस्नु पर्दछ ।

**उदक्यां सूतिकां वाऽपि अन्त्यजां स्पृशते यदि ।**
**त्रिरात्रेणैव शुद्धिः स्याद्विधिरेष पुरातनः॥२७०॥**

रजस्वला, अन्त्यज र सुत्केरीलाई छोए तीन रातमा शुद्धि हुन्छ, यो प्राचीन विधि हो ।

**संसर्गे यदि गच्छेच्चेदुदक्याया तथान्त्यजैः ।**
**प्रायश्चित्ती स विज्ञेयः पूर्वं स्नानं समाचरेत् ॥२७१॥**

रजस्वला तथा अन्त्यजका साथ संसर्ग भए प्रायश्चित हुन्छ त्यसका लागि पहिले स्नान गर्नू ।

**एकरात्रं चरेन्मूत्रं पुरीषं तु दिनत्रयम् ।**
**दिनत्रयम् तथा पाने मैथुने पञ्च सप्त वा ॥२७२॥**

एक रात गहुँत र तीन रात गोबर खानू, जलपानमा गरे तीन दिन गहुँत र तीन दिन गोबर खानू तथा गमन गरे पाँच दिन गहुँत र सात दिन गोबर खानू ।

**स्मृत्यन्तरम्- अंगीकारेण ज्ञातीनां ब्राह्मणानुग्रहेण च ।**
**पूयन्ते तत्र पापिष्ठा महापातकिनोऽपि ये ॥२७३॥**

अरु स्मृतिमा बताइए अनुसार-आफ्नो जातिले स्वीकार गरे वा ब्राह्मणहरूको कृपाले महापापीका पाप पनि शुद्ध हुन्छन् ।

**भोजने तु प्रसक्तानां प्राजापत्यं विधीयते ।**
**दन्तकाष्ठे त्वहोरात्रमेष शौचविधिः स्मृतः ॥२७४॥**

उल्लेखित विधिले शुद्ध नभएका पापीसँग खाना खाने पुरुषले प्राजापत्य व्रत गर्नुपर्ने विधान छ । ती सँगै दाँत माझे एक दिनरातमा शुद्ध हुन्छ । पवित्र हुने विधि यही हो ।

**रजस्वला यदा स्पृष्टा श्वानचाण्डालवायसैः ।**
**निराहारा भवेत्तावत्स्नात्वा कालेन शुद्ध्यति ॥२७५॥**

रजस्वलालाई कुकुर, चाण्डाल र कागले छोए तीन दिन निराहार बस्नू, चौथो दिन नुहाए पछि शुद्धि हुन्छ ।

**रजस्वला यदा स्पृष्टा उष्ट्रजम्बुकशम्बरैः ।**
**पञ्चरात्रं निराहारा पञ्चगव्येन शुद्ध्यति ॥२७६॥**

रजस्वलालाई ऊँट, स्याल र शम्बर मृगले छोए छ रात निराहार बसी पञ्चगव्य खानाले शुद्ध हुन्छे ।

**स्पृष्टा रजस्वलाऽन्योन्यं ब्राह्मण्या ब्राह्मणी च या ।**
**एकरात्रं निराहारा पञ्चगव्येन शुद्ध्यति ॥२७७॥**

रजस्वला भएकी ब्राह्मणीले अर्की रजस्वला भएकी ब्राह्मणीलाई छोए एक रात निराहार बसी पञ्चगव्य खाए पछि शुद्ध हुन्छे ।

**स्पृष्टा रजस्वलाऽन्योन्यं ब्राह्मण्या क्षत्रिणी च या ।**
**त्रिरात्रेण विशुद्धिःस्याद् व्यासस्य वचनं यथा ॥२७८॥**

रजस्वला भएकी ब्राह्मणीले अर्की रजस्वला भएकी क्षेत्रिणीलाई छोए तीन रातमा शुद्ध हुन्छे भनी व्यासले बताएका छन् ।

**स्पृष्टा रजस्वलाऽन्योन्यं ब्राह्मण्या वैश्यसम्भवा ।**
**चतूरात्रं निराहारा पञ्चगव्येन शुद्ध्यति ॥२७९॥**

रजस्वला भएकी ब्राह्मणीले अर्की रजस्वला भएकी वैश्यालाई छोए चार रात निराहार बसी पञ्चगव्य खाए पछि शुद्ध हुन्छे ।

**स्पृष्टा रजस्वलाऽन्योन्यं ब्राह्मण्या शूद्रसम्भवा ।**
**षड्रात्रेण विशुद्धिःस्यात् ब्राह्मणीकामकारतः ॥२८०॥**

रजस्वला ब्राह्मणीले अर्की रजस्वला शूद्रालाई छोए छ रातमा शुद्ध हुन्छे, यसरी ब्राह्मणीले चाहे अनुसार व्रत आदि गरेर पनि शुद्ध हुन्छे ।

**अकामतश्चरेदूर्ध्वं ब्राह्मणी सर्वतः स्पृशेत् ।**
**चतुर्णामपि वर्णानां शुद्धिरेषा प्रकीर्तिता ॥२८१॥**

अरुले भने अनुसार प्रायश्चित गरी ब्राह्मणीले सबैलाई छुनु, यही नै चारै वर्णका लागि शुद्धिको तरिका बताइएको छ ।

**उच्छिष्टेन तु संस्पृष्टो ब्राह्मणो ब्राह्मणेन यः ।**
**भोजने मूत्रचारे च शंखस्य वचनं यथा ॥२८२॥**
**स्नानं ब्राह्मणसंस्पर्शे जपहोमौ तु क्षत्रिये ।**
**वैश्ये नक्तं च कुर्वीत शूद्रे चैव उपोषणम् ॥२८३॥**

जुठोमुख हुँदा, भोजन गर्दा वा मूत्रत्याग गर्दा ब्राह्मणलाई ब्राह्मणले छोए नुहाउनू, क्षत्रियलाई छोए जपहोम गर्नू, वैश्यलाई छोए नक्तव्रत गर्नू तथा शूद्रलाई छोए पनी उपवास बस्नू भनी शङ्ख ऋषिले बताएका छन् ।

**चर्मको रजको वैण्यो धीवरे नटके तथा ।**
**एतान्स्पृष्ट्वा द्विजो मोहादाचामेत्प्रयतोऽपि सन् ॥२८४॥**
**एतैः स्पृष्ट्वा द्विजो नित्यमेकरात्रं पयः पिवेत् ।**

**उच्छिष्टैस्तैस्त्रिरात्रं स्याद्घृतं प्राश्य विशुद्ध्यति ॥२८५॥**

चमार, धोबी, वेश्यापुत्र, माझी र नटुवालाई अज्ञानले छुने ब्राह्मणले सावधान भई आचमन गर्नू, यिनले ब्राह्मणलाई छोए भने एक रात दूध पिउनू तर जुठोमुखका ब्राह्मणलाई छोए नुहाएर घिउ खानाले शुद्ध हुन्छन् ।

**यस्तुच्छायां श्वपाकस्य ब्राह्मणस्त्वधिगच्छति ।**
**तत्र स्नानं प्रकुर्वीत घृतं प्राश्य विशुद्ध्यति ॥२८६॥**

श्वपाकको छाँया ब्राह्मणमा परेमा ब्राह्मणले नुहाएर घिउ खाए शुद्ध हुन्छ ।

**अभिशस्तो द्विजोरण्ये ब्रह्महत्याव्रतं चरेत् ।**
**मासोपवासं कुर्वीत चान्द्रायणमथापि वा ॥२८७॥**

कलङ्कित ब्राह्मणले वनमा गई ब्रह्महत्याको व्रत गर्नु, एक महिना उपवास बस्नु वा चान्द्रायण व्रत गर्नु पर्दछ ।

**वृथा मिथ्योपयोगेन भ्रूणहत्याव्रतं चरेत् ।**
**अब्भक्षो द्वादशाहेन पराकेणैव शुद्ध्यति ॥२८८॥**

हत्याको झुटो आरोप लागेकाले भ्रूणहत्याको व्रत गर्नू, बाह्र दिनसम्म पानी मात्र पिई पराक व्रतले शुद्ध हुन्छ ।

**शठं च ब्राह्मणं हत्वा शूद्रहत्वा व्रतं चरेत् ।**
**निर्गुणं सगुणो हत्वापराकं व्रतमाचरेत् ॥२८९॥**

मूर्ख ब्राह्मणको हत्या गरे शूद्रहत्याको व्रत र गुणी ब्राह्मणले मूर्खलाई मारे पराक व्रत गर्नू ।

**उपपातकसंयुक्तो मानवो म्रियते यदि ।**
**तस्य संस्कारकर्ता च प्राजापत्यद्वयं चरेत् ॥२९०॥**

उपपापले युक्त पापी मनुष्य मर्दछ र त्यसको मृत्युसंस्कार गर्दछ कसैले भने उसले दुई प्राजापत्य व्रत गर्नू ।

**प्रभुञ्जानोऽतिस्नेहं कदाचित् स्पृशते द्विजः ।**
**त्रिरात्रमाचरेन्नक्तैर्निः स्नेहमथ वा चरेत् ॥२९१॥**

अति चिल्ला पदार्थ खाँदा कसैले द्विजलाई छोयो भने उसले तीन रात व्रत गर्नू वा सुक्खा चिज खानू ।

**विडालकाकाद्युच्छिष्टं जग्ध्वाश्वनकुलस्य च ।**

**केशकीटावपन्नं च पिवेद्ब्राह्मीं सुवर्चलाम्॥२९२॥**

बिरालो, कौवा, कुकुर र न्याहुरीमुसाको जुठो खाएमा तथा कपाल र कीरा परेको खाना खाएमा ब्राह्मी खानू ।

**उष्ट्रयानं समारुह्य खरयानं च कामतः ।**
**स्नात्वा विप्रो जितप्राणः प्राणायामेन शुद्ध्यति ॥२९३॥**

स्वेच्छाले ऊँट वा गधागाडीमा चढेमा ब्राह्मणले स्नान, अल्पाहार र प्राणायाम गर्नाले शुद्ध हुन्छ ।

**सव्याहृती सप्रणवां गायत्रीं शिरसा सह ।**
**त्रिःपठेद्वा यतप्राणःप्राणायामःस उच्यते ॥२९४॥**

व्याहृती (भू आदि), ॐकार र शिरमन्त्र सहित सास रोकेर तीन पटक गायत्री (मनमनै) पढ्नुलाई प्राणायाम भनिन्छ ।

**सकृद्द्विगुणगोमूत्रं सर्पिदद्याच्चतुर्गुणम् ।**
**क्षीरमष्टगुणं देयं पञ्चगव्ये तथा दधि ॥२९५॥**

गोबर, गोबरको दोबर गहुँत, गोबरको चौबर घिउ र गोबरको आठ गुणा दूधदही हालेर पञ्चगव्य बनाउनू ।

**पञ्चगव्यं पिवेच्छूद्रो ब्राह्मणस्तु सुरां पिवेत् ।**
**उभौ तौ तुल्यदोषौ च वसतो नरके चिरम्॥२९६॥**

शुद्रले पञ्चगव्य पिउनु र ब्राह्मणले मदिरा पिउनु : दुवैको दोष समान हुन्छ र लामो समयसम्म नरक वास गराउँदछ ।

**अजा गावो महिष्यश्च अमेध्यं भक्षयन्ति याः ।**
**दुग्धं हव्ये च कव्ये च गोमयं न विलेपयेत्॥२९७॥**

अशुद्ध वस्तु खाने बाख्री, गाई र भैंसीको दूध हव्यकव्यमा नचलाउनू तथा त्यस्तो गोबरले नलिप्नू ।

**ऊनस्तनी अधीका वा या च स्वस्तनपायिनी ।**
**तासां दुग्धं न होतव्यं हुतं चैवाहुतं भवेत्॥२९८॥**

घटी वा साना वा धेरै थुन भएका तथा आफ्नो दूध आफैं पिउने खालका गाईको दूधले होम नगर्नू, गरेपनि नगरे समान हुन्छ ।

**ब्राह्मौदने च सोमे च सीमन्तोन्नयने तथा ।**
**जातश्राद्धे नवश्राद्धे भुक्त्वा चान्द्रायणं चरेत् ॥२९९॥**

ब्रतवन्ध, सोम यज्ञ र सीमन्तोन्नयनमा तथा जातकर्मश्राद्ध र नवश्राद्धमा भोजन गरे चान्द्रायण व्रत गर्नू ।

**राजान्नं हरते तेजः शूद्रान्नं ब्रह्मवर्चसम् ।**
**स्वसुतान्नं च यो भुङ्क्ते स भुङ्क्तेपृथिवीमलम् ॥३००॥**

राजाको अन्नले तेज र शूद्रको अन्नले ब्रह्मतेज नाश हुन्छ । छोरीको अन्न जसले खान्छ त्यसले धरतीको मल खाए सरह हुन्छ ।

**स्वसुता अग्रजा तावन्नाश्नीयात्तद्गृहे पिता ।**
**अन्नं भुङ्क्ते तु यो मोहात्पूयं नरकं व्रजेत् ॥३०१॥**

सन्तान नभएका छोरीको घरको अन्न जुन बाबुले खान्छ त्यसले पूय नामक नरकमा पर्नु पर्दछ ।

**अधीत्य चतुरो वेदान् सर्वशास्त्रार्थतत्त्ववित् ।**
**नरेन्द्रभवने भुक्त्वा विष्ठायां जायते कृमिः ॥३०२॥**

चारै वेद पढेर सबै शास्त्रहरुको अर्थतत्व जानेकाले राजभवनमा गई खाए गुहुको कीरा हुनु पर्दछ ।

**नवश्राद्धे त्रिपक्षे च षण्मासे मासिकेऽब्दिके ।**
**पतन्ति पितरस्तस्य यो भुङ्क्तेऽनापदि द्विजः ॥३०३॥**

नौ दिन, पैंतालीस दिन, छ महिना, मासिक र वर्षान्तका श्राद्धमा अप्ठ्यारो नमानी खाने द्विजका पितृ नरक पर्दछन् ।

**चान्द्रायणं नवश्राद्धे पराको मासिके तथा ।**
**त्रिपक्षे चैव कृच्छ्रःस्यात् षण्मासे कृच्छ्रमेव च ॥३०४॥**

नौ दिनको श्राद्ध खाए चान्द्रायण, मासिकमा खाए पराक, ४५ औं मा खाए कृच्छ्र र ६ महिनामा खाए अतिकृच्छ्र व्रत गर्नू ।

**आब्दिके पादकृच्छ्रःस्यादेकाहःपुनराब्दिके ।**
**ब्रह्मचर्यमनाधाय मासश्राद्धेषु पर्वसु ॥३०५॥**

पहिलो वर्षान्तका पादकृच्छ्र र दोश्रो वर्षान्तमा खाए एक दिन उपवास बस्नू । द्विजोत्तमले ब्रह्मचर्य पालना नगरी मासिक र पर्वश्राद्ध खाए,..।

**द्वादशाहे त्रिपक्षेऽब्दे यस्तु भुङ्क्ते द्विजोत्तमः ।**
**पतन्ति पितरस्तस्य ब्रह्मलोके गता अपि ॥३०६॥**

१२ औं मा, ४५ औं मा र वार्षिकीमा खाए उसका पितृहरु ब्रह्मलोकमै भएपनि नरकमा जान्छन् ।

**पक्षे वा यदि वा मासे यस्य नाश्नन्ति वै द्विजाः ।**
**भुक्त्वा दुरात्मनस्तस्य द्विजश्चान्द्रायणं चरेत् ॥३०७॥**

१५ दिन वा महिनामा जुन गृहस्थ द्विजका घरमा ब्राह्मण भोजन गर्दैनन् त्यस्ताको अन्न खाने द्विजले चान्द्रायण गर्नू ।

**एकादशाहेऽहोरात्रं भुक्त्वा सञ्चयने त्र्यहं ।**
**उपोष्य विधिवद्विप्रः कूष्माण्डीं जुहुयाद् घृतम् ॥३०८॥**

मरेको ११ औं खानेले १ दिनरात र अस्थिसञ्चयनका दिन खानेले ३ दिनसम्म विधिले उपवास बसी घिउ होम्नू ।३०८।

**यन्न वेदध्वनिश्रान्तं न च गोभिरलङ्कृतम् । यन्न बालैः परिवृत्तं श्मशानमिव तद्गृहम् ॥३०९॥**

वेदध्वनि नसुनिने, गाईले शोभा नदिएको र बालकहरु चलखेल नभएको घर मसान समान हुन्छ ।

**हास्येऽपि बहवो यत्र विना धर्मं वदन्ति हि ।**
**विनाऽपि धर्मशास्त्रेण स धर्मःपावनः स्मृतः ॥३१०॥**

हाँसख्यालमा धेरैले धर्मविना बोलेको कुरा धर्मशास्त्र विरुद्ध भएपनि त्यसलाई धर्म मानिएको छ ।

**हीनवर्णे च यः कुर्यादज्ञानादभिवादनम् ।**
**तत्र स्नानं प्रकुर्वीत घृतं प्राश्य विशुद्ध्यति ॥३११॥**

आफूभन्दा तल्लो वर्णलाई जसले नमस्कार गर्दछ त्यो मानिस, नुहाएर घिउ खानाले शुद्ध हुन्छ ।

**समुत्पन्ने यदा स्नाने भुङ्क्ते वाऽपि पिवेद्यदि ।**
**गायत्र्यष्टसहस्रं तु जपेत स्नात्वा समाहितः ॥३१२॥**

नुहाउन सक्ने हुँदाहुँदै ननुहाई जसले खान्छ वा पिउँछ, त्यसले सावधान भई नुहाएर आठ हजार गायत्री जप्नू ।

**अङ्गुल्या दन्तकाष्ठं च प्रत्यक्षं लवणं तथा ।**
**मृत्तिकाभक्षणं चैव तुल्यं गोमांसभक्षणम् ॥३१३॥**

औंलाले दाँत माझ्नु, खाली नुन खानु र माटो खानु गोमांस खानु समान हो ।

**दिवा कपित्थच्छायां रात्रौ दधि शमीषु च ।**
**कार्पासं दन्तकाष्ठं च विष्णोरपि हरेच्छ्रियम् ॥३१५॥**

दिउसो खयरको छायामा बस्नाले तथा रातमा शमी र कपासले दाँत माझ्नाले विष्णुकै लक्ष्मी पनि नाश हुन्छ ।

**शुर्पवातो नखाग्रांबु स्नानवस्त्रं पदोदकम् ।**
**मार्जनीरजः केशाम्बु देवतायतनोद्भवम् ॥३१५॥**

नाङ्लाको हावा, नङको टुप्पोको पानी, वस्त्रबाट चुहिएको पानी, कुचोको धुलो र कपालको पानी यदि यी देवस्थलका भए..।

**तेनावगुण्ठितं तेषु गङ्गांभःप्लुत एव सः ।**
**मार्जनीरेणुकेशाम्बु हन्ति पुण्यं दिवाकृतम् ॥३१६॥**

त त्यसले ढाकिनु गङ्गाजलले ढाकिनु समान हुन्छ । कुचोको धुलो र कपालको पानीले अरु बेला ढाकिँदा यसले मानिसले दिनमा गरेको पुण्य नाश गर्दछ ।

**मृत्तिकाः सप्त न ग्राह्या वल्मीके उषरस्थले ।**
**अन्तर्जले श्मशानान्ते वृक्षमूले सुरालये ॥३१७॥**

धमिराको गोलोको, मुसाको दुलोको, पानीभित्रको, मसानको, रुखको फेदको, देवस्थलको र..।

**वृषभैश्च तथोत्खाते श्रेयष्कामैः सदा बुधैः ।**
**शुचौ देशे तु संग्राह्या शर्कराश्मविवर्जिता ॥३१८॥**

बैलले खोस्रेको गरी सात थरी माटो कल्याण चाहनेले (शुद्धिका लागि) प्रयोग नगर्नू । गेगर रहित र पत्थर रहित शुद्ध माटो प्रयोग गर्नू ।

**पुरीषे मैथुने होमे प्रस्रावे दन्तधावने ।**

**स्नानभोजनजप्येषु सदा मौनं समाचरेत्॥३१९॥**

दिसा बस्दा, मैथुन गर्दा, होम गर्दा, पिसाब फेर्दा, दाँत माझ्दा, नुहाउँदा, खाँदा र जप गर्दा मौन रहनू ।

**यस्तु संवत्सरं पूर्णं भुक्ते मौनेन सर्वदा ।**
**युगकोटिसहस्रेषु स्वर्गलोके महीयते॥३२०॥**

जसले एक वर्षसम्म पूर्ण मौन रही भोजन गर्दछ, त्यसलाई एक हजार करोड वर्षसम्म स्वर्ग प्राप्त हुन्छ ।

**स्नानं दानं जपं होमं भोजनं देवतार्चनम् ।**
**प्रौढपादो न कुर्वीत स्वाध्यायं पितृतर्पणम्॥३२१॥**

स्नान, दान, जप, होम, भोजन, देवताको पूजा, वेदाध्ययन र पितृलाई तर्पण गर्दा गोडा पसारेर नगर्नू ।

**सर्वस्वमपि यो दद्यात् पातयित्वा द्विजोत्तमम् ।**
**नाशयित्वा तु तत्सर्वं भ्रूणहत्याफलं लभेत्॥३२४॥**

उत्तम द्विजलाई पतित बनाई सर्वस्व दान गरे पनि सबै कुरा नासिई गर्भहत्याको पाप बोक्नु पर्दछ ।

**ग्रहणोद्वाहसंक्रान्तौ स्त्रीणां च प्रसवे तथा ।**
**दानं नैमित्तिकं ज्ञेयं रात्रौ चापि प्रशस्यते॥३२३॥**

ग्रहण, विवाह, संक्रान्ति र सूतकको दान नैमित्तिक दान हुन्छ र रातमा गर्दा पनि श्रेष्ठ हुन्छ ।

**क्षौमजं वाऽथ कार्पासं पट्टसूत्रमथापि वा ।**
**यज्ञोपवितं यो दद्याद्वस्त्रदानफलं लभेत्॥३२४॥**

रेसम, सुती र पाटले बनेको जनै दान गर्नेले वस्त्रदान गरेको फल प्राप्त गर्दछ ।

**कांस्यस्य भाजनं दद्याद्घृतपूर्णं सुशोभनम् ।**
**तथा भक्त्या विधानेन अग्निष्टोमफलं लभेत्॥३२५॥**

श्रद्धा र विधिपूर्वक काँसको भाँडाभरी घिउ दान गर्नेले अग्निष्टोम यज्ञ गरेको फल प्राप्त गर्दछ ।

**श्राद्धकाले तु यो दद्याच्छोभनौ च उपानहौ ।**
**स गच्छन्नन्यमार्गेऽपि अश्वदानफलं लभेत्॥३२६॥**

श्राद्धमा सुन्दर जुत्ता दान गर्नाले कुमार्गमा हिँड्दै गरेको भएपनि घोडा दान गरेको फल प्राप्त गर्दछ ।

**तिलपात्रं तु यो दद्यात् संपूर्णं तु समाहितः ।**
**स गच्छति ध्रुवं स्वर्गे नरो नास्त्यत्र संशयः ॥३२७॥**

तिलले भरिएको भाँडो जसले दान गर्दछ त्यो मानिस स्वर्ग जान्छ भन्ने कुरामा शङ्का छैन ।

**दुर्भिक्षे अन्नदाता च सुभिक्षे च हिरयण्यदः ।**
**पानीयदस्त्वरण्ये च स्वर्गलोके महीयते ॥३२८॥**

अकालमा अन्न, सकालमा सुन एवं वनमा पानी दानगर्ने स्वर्गमा पूजिन्छ ।

**यावदर्धप्रसूता गौस्तावत्सा पृथिवी स्मृता ।**
**पृथिवीं तेन दत्ता स्यादीदृशीं गां ददाति यः ॥३२९॥**

ब्याउँदा ब्याउँदैकी गाई पृथ्वी समान हुन्छे, जसले यस्तो गाई दान गर्दछ त्यसले पृथ्वी दान गरेझैं हुन्छ ।

**तेनाग्नयो हुताः सम्यक्पितरस्तेन तर्पिताः ।**
**देवाश्च पूजिताः सर्वे यो ददाति गवाह्निकम् ॥३३०॥**

जसले गाईलाई नित्य खुवाउँछ, त्यसले नित्य अग्निहोत्र, पितृ-तर्पण र देवपूजा गरे सरह हुन्छ ।

**जन्मप्रभृति यत्पापं मातृकं पैतृकं तथा ।**
**तत्सर्वं नश्यति क्षिप्रं वस्त्रदानान्न संशयः ॥३३१॥**

जन्म आदि आमाबाबु प्रति गरिएका अपराधहरु वस्त्रदान गर्नाले चाँडै नाश हुन्छन्, यसमा शङ्का छैन ।

**कृष्णाजिनं तु यो दद्यात्सर्वोपस्करसंयुतम् ।**
**उद्धरेन्नरकस्थानात्कुलान्येकोत्तरं शतम् ॥३३२॥**

कृष्णसार मृगको सिङआदि समेतको छाला जसले दान गर्दछ, त्यसले नरकमा परेका १०१ कुलको उद्धार गर्दछ ।

**आदित्यो वरुणो विष्णुर्ब्रह्मासोमो हुताशनः ।**
**शूलपाणिस्तु भगवान् अभिनन्दन्ति भूमिदम् ॥३३३॥**

सूर्य, वरुण, विष्णु, ब्रह्मा, चन्द्रमा, अग्नि र शिव भगवानहरु भूमिदान गर्नेको प्रशंसा गर्दछन् ।

**बालुकानां कृता राशिर्यावत् सप्तर्षिमण्डलम् ।**
**गते वर्षशते चैव पलमेकं विशीर्यति ॥३३४॥**
**क्षयं च दृश्यते तस्य कन्यादाने न चैव हि ॥३३५॥**

सप्तर्षि तारामण्डलसम्म पुग्ने गरी अग्लो पारी थुपारिएको बालुवाको थुप्रो १०० वर्षमा अलिअलि गर्दै नासिएला तर कन्यादानबाट हुने धर्म नाश हुँदैन ।

**आतुरे प्राणदाता च त्रीणि दानफलानि च ।**
**सर्वेषामेव दानानां विद्यादानं ततोऽधिकम् ॥३३६॥**

दुःखीलाई दिइएको प्राणदान (रक्षा) ले धर्म, अर्थ र काम प्राप्त हुन्छ । सबै दानभन्दा विद्यादान श्रेष्ठ हुन्छ ।

**पुत्रादिस्वजने दद्याद्विप्राय च न कैतवे ।**
**सकामः स्वर्गमाप्नोति निष्कामो मोक्षमाप्नुयात् ॥३३७॥**

विद्यादान पुत्रआदि आफन्त र ब्राह्मणलाई दिनु न कि कपटीलाई । फलको आश राखी विद्यादान गर्नेले स्वर्ग र आश नगरी गर्नेले मोक्ष पाउँछ ।

**ब्राह्मणे वेदविदुषिसर्वशास्त्रविशारदे ।**
**मातृपितृपरे चैव ऋतुकालाभिगामिनि ॥३३८॥**
**शीलचारित्रसंपूर्णे प्रातःस्नानपरायणे ।**
**तस्यैव दीयते दानं यदीच्छेच्छ्रेय आत्मनः ॥३३९॥**

वेद जान्ने, सबैशास्त्रमा निपुण, मातापिताको भक्त, ऋतुकालमा स्त्रीगमन गर्ने, उत्तम शीलस्वभाव भएको र बिहान नुहाउन तत्पर रहने ब्राह्मणलाई नै आत्मकल्याण चाहनेले दान दिनु पर्दछ ।

**संपूज्य विदुषो विप्रान्नन्येभ्योऽपि प्रदीयते ।**
**तत्कार्यः नैव कर्तव्यं न दृष्टं न श्रुतं मया ॥३४०॥**

विद्वान ब्राह्मणलाई पहिले पूजा गरेर अन्य ब्राह्मणलाई पनि दान दिन सकिन्छ । यस्तो कर्म जो न कसैले सुनेका छन् र न कसैले देखेका छन्, त्यस्तो कार्य नगर्नू ।

**अतःपरं प्रवक्ष्यामि श्राद्धकर्मणि ये द्विजाः ।**
**पितृणामक्षयं दानं दत्तं येषां तु निष्फलम् ॥३४१॥**

यसपछि श्राद्धमा जस्ता ब्राह्मणलाई दान दिनाले पितृका लागि अक्षय हुन्छ र जस्ता ब्राह्मणलाई दान दिनाले कुनै फल पाइन्न त्यसका बारेमा बताउँदछु ।

**न हीनाङ्गो न रोगी च श्रुतिस्मृति विवर्जितः ।**
**नित्यं चानृतवादी च तांस्तु श्राद्धे न भोजयेत् ॥३४२॥**

अङ्गहीन, रोगी, श्रुतिस्मृति नजान्ने र सधैं झुटो बोल्ने ब्राह्मणलाई श्राद्धमा भोजन नगराउनू ।

**हिंसारतं च कपटमुपगूह्य श्रुतं च यः ।**
**किंकरं कपिलं काणं श्वित्रिणं रोगिणं तथा ॥३४३॥**

हिंसामा तत्पर रहने, कपटी, वेद लुकाउने, कमारो, जन्डिस भएको, कानु, दादको रोगी तथा..।

**दुश्चर्माणं शीर्णकेशं पाण्डुरोगं जटाधरम् ।**
**भारवाहिनं रौद्रं च द्विभार्यं वृषलीपतिम् ॥३४४॥**

छाला बिग्रेको, कपाल झरेको, पाण्डुरोगी, जटा पालेको, भारी बोक्ने, डरलाग्दो, दुई जोईको पोई, शूद्रासँग विवाह गर्ने तथा..।

**भेदकारी भवेच्चैव बहुपीडाकरोऽपि वा ।**
**हीनातिरिक्तगात्रो वा तमप्यपनयेत्तथा ॥३४५॥**

नचाहिँदा कुरा लगाएर अरुको झगडा गराउने (छुस्कर), धेरैलाई दुःख पुऱ्याउने, कम अङ्ग हुने र अधिक अङ्ग हुनेलाई पनि श्राद्धमा नखुवाउनू ।

**बहुभोक्ता दीनमुठो मत्सरी क्रूरबुद्धिमान् ।**
**एतेषां नैव दातव्यः कदाचिद्धै प्रतिग्रहः ॥३४६॥**

धेरै खाने (वा जासुस), मलिन अनुहारको, डाडे (परक्षिद्रान्वेषी) र क्रूरबुद्धि भएकाहरुलाई कुनै हालतमा पनि दान नदिनू ।

**अथ चेन्मन्त्र विद्युक्तः शारीरैः पङ्क्तिदूषणैः ।**
**अदूष्यं तं यमः प्राह पङ्क्तिपावन एव सः ॥३४७॥**

मन्त्र जानेको ब्राह्मणमा शारीरिक दोषै भएपनि यमका अनुसार उ पङ्क्तिपावन नै मानिन्छ ।

**श्रुतिः स्मृतिश्च विप्राणां नयने द्वे प्रकीर्तिते ।**
**काणः स्यादेकहीनोह्यपि द्वाभ्यामन्ध प्रकीर्तितः ॥३४८॥**

वेद् र स्मृतिलाई ब्राह्मणका दुई आँखा मानिएको छ, यसैले एउटा नभए कानु र दुवै नभए अन्धो हुन्छ ।

**न श्रुतिर्नस्मृतिर्यस्य न शीलं न कुलं यतः ।**
**तस्य श्राद्धं न दातव्यं त्वन्धकस्यात्रिरब्रवीत् ॥३४९॥**

वेद् तथा स्मृति नजान्ने, नराम्रो स्वभाव र दुष्कुलको व्यक्ति अन्धो नै हुने हुनाले श्राद्धमा नखुवाउनु भनी अत्रिले भनेका छन् ।

**तस्माद्वेदेन शास्त्रेण ब्राह्मण्यं ब्राह्मणस्य तु ।**
**न चैकेनेव वेदेन भगवानत्रिरब्रवीत् ॥३५०॥**

त्यसैले ब्राह्मणको ब्राह्मणत्व वेद् र शास्त्र दुबैमा हुन्छ, केवल वेदमा मात्र होइन भनी अत्रीले भनेका छन् ।

**योगस्थैर्लोचनैर्युक्तः पादाग्रं च प्रयच्छति ।**
**लौकिकज्ञैश्च शास्त्रोक्तं पश्येच्चैवाधरोत्तरम् ॥३५१॥**

योगशास्त्रले बताए अनुसारका आँखा हुने र आफ्नो चरणको अग्रभाग हेरेर हिँड्ने (अन्त कुदृष्टि नलाउने), लोक-व्यवहार जान्ने, शास्त्रीय उच-निचता हेर्ने तथा..।

**वेदैश्च ऋषिभिर्गीतं दृष्टिमाञ्छास्त्रवेदवित् ।**
**व्रतिनं च कुलीनं च श्रुतिस्मृतिरतं सदा ॥**
**तादृशं भोजयेच्छ्राद्धे पितृणामक्षयं भवेत् ॥३५२॥**

वेद् र शास्त्रका ज्ञाता, व्रत बस्ने, कुलिन, वेद् र शास्त्र पढ्नपढाउन तत्पर रहने । यस्ता ब्राह्मणलाई श्राद्धमा भोजन गराएमा पितृलाई अक्षय तृप्ति मिल्दछ ।

**यावतो ग्रसते ग्रासान्पितृणां दीप्ततेजसाम् ।**
**पिता पितामहश्चैव तथैव प्रपितामहः ॥३५३॥**

यस्ता ब्राह्मणले जति गाँस खान्छन् त्यतिनै तेजमान भई पिता,पितामह र प्रपितामह...।

**नरकस्था विमुच्यन्ते ध्रुवं यान्ति त्रिविष्टपम् ।**
**तस्माद्विप्रं परीक्षेत श्राद्धकाले प्रयत्नतः ॥३५४॥**

सबै पितृहरु नरकमा छन् भने पनि त्यहाँबाट छुटी निश्चय नै स्वर्ग जान्छन् । त्यसैले श्राद्धमा प्रयत्नपूर्वक ब्राह्मणको परीक्षा गर्नू ।

**न निर्व्वपति यः श्राद्धं प्रमीतपितृको द्विजः ।**
**इन्दुक्षये मासि मासि प्रायश्चित्ती भवेत्तु सः ॥३५५॥**

बाबु मरेका द्विजले महिनै पिच्छे औंसीमा श्राद्ध नगरे तिनीहरुले प्रायश्चित गर्नु पर्ने हुन्छ ।

**सूर्ये कन्यागते कुर्याच्छ्राद्धं यो न गृहाश्रमी ।**
**धनं पुत्रवान् कुलं तस्य पितृनिश्वासपीडया ॥३५६॥**

महालय श्राद्धकालमा श्राद्ध नगर्नेका पितृहरु निराश भई लामो सास फेर्दछन् र त्यसको धन र कुल नष्ट हुन्छ ।।

**कन्यागते सवितरि पितरो यान्ति सत्सुतान् ।**
**शून्या प्रेतपुरी सर्वा यावद्वृश्चिकदर्शनम् ॥३५७॥**

सूर्य कन्याराशीमा गए पछि सबै पितृहरु आफ्ना सुपुत्रका नजिक आउँदछन् । सूर्य वृश्चिक राशीमा नगएसम्म सबै यमलोक आदि प्रेतलोक शून्य हुन्छन् ।

**ततो वृश्चिकसंप्राप्ते निराशाः पितृरो गताः ।**
**पुनः स्वभवनं यान्ति शापं दत्त्वा सुदारुणम् ॥३५८॥**

वृश्चिक संक्रान्ति पछि पितृहरु निराश भएर भयानक श्राप दिई आफ्नो भवनमा जान्छन् ।

**पुत्रं वा भ्रातरं वाऽपि दौहित्रं पौत्रकं तथा ।**
**पितृकार्ये प्रसक्ता ये ते यान्ति परमां गतिम् ॥३५९॥**

पुत्र, भाई, छोरीको छोरो र नाती यि बाबुको श्राद्धमा आए भने यी सबैले परम गति प्राप्त गर्दछन् ।

**यथा निर्मन्थनादग्निः सर्वकाष्ठेषु तिष्ठति ।**
**तथा संदृश्यते धर्मः श्राद्धदानान्न संशयः ॥३६०॥**

जसरी सबै काठमा रहेको अग्नि, काठको मन्थनबाट देखिन्छ त्यसरी नै धर्म, श्राद्धको दानबाट देखिन्छ, यसमा शङ्का छैन ।

**यःप्राप्नोति तदा सर्वं कन्यागते च गंगया ।**
**सर्वशास्त्रार्थगमनं सर्वतीर्थावगाहनम् ॥३६१॥**
**सर्वयज्ञफलं विन्द्याच्छ्राद्धदानान्न संशयः ॥३६२॥**

सूर्य कन्या राशिमा गएका समयमा गंगामा श्राद्ध गर्नेले सबै शास्त्र पढेको, सबै तीर्थमा नुहाएको, सत्रयज्ञ गरेको र विद्यादान गरेको फल प्राप्त गर्दछ, यसमा कुनै शंका छैन ।

**महापातकसंयुक्तो यो युक्तश्चोपपातकैः ।**
**घनैर्मुक्तो यथा भानूराहुमुक्तश्च चन्द्रमाः ॥३६३॥**

महापापी र उपपापीले पनि श्राद्धमा गरेको दानले पापबाट यसरी मुक्त हुन्छ, जसरी सूर्य बादलबाट र ग्रहणबाट चन्द्रमा ।

**सर्वपापविनिर्मुक्तः सर्वपापं विलङ्घयेत् ।**
**सर्वसौख्यं स्वयं प्राप्तः श्राद्धदानान्न संशयः ॥३६४॥**

श्राद्धको दानले सबै पापबाट मुक्ति र पाप नाघिन्छ तथा सबै सुख प्राप्त हुन्छ, यसमा शङ्का छैन ।

**सर्वेषामेव दानानां श्राद्धदानं विशिष्यते ।**
**मेरुतुल्यं कृतं पापं श्राद्धदानं विशोधनम् ॥३६५॥**

श्राद्धको दान सबै दानभन्दा श्रेष्ठ हुन्छ र मेरु पर्वत समानका पापबाट पनि शुद्ध बनाउँदछ ।

**श्राद्धं कृत्वा तु मर्त्यो वै स्वर्गलोके महीयते ।**
**अमृतं ब्राह्मणस्यान्नं क्षत्रियान्नं पयःस्मृतम् ॥३६६॥**

श्राद्ध गरेमा मानिसले स्वर्गमा सुख पाउँछ । ब्राह्मणको अन्न अमृतसमान र क्षत्रियको अन्न दूध समान मानिएको छ ।

**वैश्यस्य चान्नमेवान्नं शूद्रान्नं रुधिरं भवेत् ।**
**एतत्सर्वं मया ख्यातं श्राद्धकाले समुत्थिते ॥३६७॥**

वैश्यको अन्न घिउसमान र शूद्रको अन्न रगतसमान हुन्छ । श्राद्धको समयमा गर्नुपर्ने यी सबै कुरा मैलै बताएँ ।

**वैश्वदेवे च होमे च देवताभ्यर्चने जपेत् ।**
**अमृतं तेन विप्रान्नमृग्यजुः सामसंस्कृतम् ॥३६८॥**

ऋग, यजु र सामवेदले सुसंकस्कृत र वैश्वदेव, होम र देवार्चनाले गर्दा ब्राह्मणको अन्न अमृत समान हुन्छ ।

**व्यवहारनुपूर्वेण धर्मेण वलिभिर्जितम् ।**
**क्षत्रियान्नं पयस्तेन घृतान्नं यज्ञपालने ॥३६९॥**

व्यवहारको क्रमले र धर्मतः बलियाले जितेर सञ्चय गरेकाले क्षत्रियको अन्न दूध समान तथा यज्ञको पालना गर्नाले वैश्यको अन्न घिउ समान हुन्छ ।

**देवो मुनिर्द्विजो राजा वैश्यः शुद्रो निषादकः ।**
**पशुर्म्लेच्छोऽपि चाण्डालो विप्रा दशविधाःस्मृताः ॥३७०॥**

देवता, मुनिजन, द्विज, राजा, वैश्य, शूद्र, निषाद, पशु, म्लेच्छ र चाण्डाल गरी दश थरी ब्राह्मण बताइएको छ ।

**सन्ध्यां स्नानं जपं होमं देवतानित्यपूजनम् ।**
**अतिथिं वैश्वदेवञ्च देवब्राह्मण उच्यते ॥३७१॥**

सन्ध्या, स्नान, जप, होम, नित्य देवताको पूजन, अतिथिको पूजन र वैश्वदेव गर्ने ब्राह्मणलाई देवब्राह्मण भनिन्छ ।

**शाके पत्रे फले मूले वनवासे सदा रतः ।**
**निरतोऽहरहः श्राद्धे स विप्रो मुनिरुच्यते ॥३७२॥**

सागपात, फलफूल  कन्दमूल खाई वनमा बस्न र श्राद्ध गर्न रातोदिन तत्पर रहने ब्राह्मणलाई मुनिब्राह्मण भनिन्छ ।

**वेदान्तं पठते नित्यं सर्वसङ्ग परित्यजेत् ।**
**सांख्ययोगविचारस्थःस विप्रो द्विज उच्यते ॥३७३॥**

रातोदिन वेदान्त पढ्ने र सबैको सङ्गती त्यागी योग र सांख्य शास्त्रका विचारमा लिन रहेका ब्राह्मणलाई द्विजब्राह्मण भनिन्छ ।

**अस्त्राहताश्च धन्वानः संग्रामे सर्वसम्मुखे ।**
**आरम्भे निर्जिता येन स विप्रःक्षत्र उच्यते ॥३७४॥**

युद्धमा सबैका सामु धनुषधारी हतियारले मारिने र युद्ध आदिजस्ता आफूले शुरु गरेको काम पूरा गर्ने ब्राह्मणलाई क्षत्रियब्राह्मण भनिन्छ ।

**कृषिकर्मरतो यश्च गवां च परिपालकः ।**
**वाणिज्य व्यवसायश्च स विप्रो वैश्य उच्यते ॥३७५॥**

कृषिकर्ममा लागिरहेका, गाईगोरु पाल्ने पेसा भएका र बन्दव्यापार तथा व्यवसाय गर्ने ब्राह्मणलाई वैश्यब्राह्मण भनिन्छ ।

**लाक्षालवणसम्मिश्रं कुसुम्भं क्षीरसर्पिषः ।**
**विक्रेता मधुमांसानां स विप्रः शूद्र उच्यते ॥३७६॥**

लाहा, नुन, कुसुम (फूल,सुन,कमण्डलु), दूध, घिउ, मिठाई र मासु बेच्ने ब्राह्मणलाई शूद्रब्राह्मण भनिन्छ ।

**चौरश्च तस्करश्चैव सूचको दंशकस्तथा ।**
**मत्स्यमांसे सदालुब्धो विप्रो निषाद उच्यते ॥३७७॥**

चोर, तस्कर, चुक्लीखोर वा जासूस (सूचक), उद्दण्ड र माछाको मासुको सधैं लोभ गर्ने ब्राह्मणलाई निषाद ब्राह्मण भनिन्छ ।

**ब्रह्मतत्त्वं न जानाति ब्रह्मसूत्रेण गर्वितः ।**
**तेनैव स च पापेन विप्रः पशुरुदाहृतः ॥३७८॥**

ब्रह्मतत्त्व (वेदज्ञान) नजान्ने र जनैको भरमा घमण्ड गर्ने ब्राह्मणलाई सो पापका कारण पशुब्राह्मण भनिन्छ ।

**वापीकूपतडागानामारामस्य सरःसु च ।**
**निःशङ्कं रोधकश्चैव स विप्रो म्लेच्छ उच्यते ॥३७९॥**

पोखरी, कुवा, ताल, बगैंचा, कुण्ड आदि बनाउनमा रोक लगाउने ब्राह्मणलाई म्लेच्छ ब्राह्मण भनिन्छ ।

**क्रीयाहीनश्च मूर्खश्च सर्वधर्मविवर्जितः ।**
**निर्दयः सर्वभूतेषु विप्रश्चाण्डाल उच्यते ॥३८०॥**

क्रियाहीन, मूर्ख, सबै खाले धर्मबाट रहित र सबैलाई क्रूर व्यवहार गर्ने ब्राह्मणलाई चाण्डाल ब्राह्मण भनिन्छ ।

**वेदैर्विहीनाश्च पठन्ति शास्त्रं शास्त्रेण हीनाश्च पुराणपाठाः ।**
**पुराणहीनाः कृषिणो भवन्ति भ्रष्टास्ततो भागवता भवन्ति ॥३८१॥**

वेद नजान्ने (ब्राह्मण) अन्य शास्त्र पढ्दछन्, पुराण पनि नजान्ने वा नआउने खेती गर्दछन् र खेती पनि नगर्ने वैरागी हुन्छन् ।

**ज्योतिर्विदो ह्यथर्वाणः कीराः पौराणपाठकाः ।**

**श्राद्धे यज्ञे महादाने वरणीयाः कदाचन ॥३८२॥**

ज्योतिष, अथर्ववेदी, सुँगाभैँ उपदेश गर्ने र पुराणपाठक ब्राह्मणलाई श्राद्ध, यज्ञ र महादानमा अरु ब्राह्मण नपाएमा मात्र वरण गर्नू ।

**श्राद्धे च पितरो घोरं दानं चैव तु निष्फलम् ।**
**यज्ञे च फलहानिः स्यात्तस्मात्तान्परिवर्जयेत् ॥३८३॥**

श्राद्धमा खुवाए पितृ घोर नरकमा पर्दछन्, दान दिए निष्फल हुन्छ र यज्ञ गरे फल नाश हुन्छ अतः यी ब्राह्मणलाई छाड्नू ।३८३।

**आविकश्चित्रकारश्च वैद्यो नक्षत्रपाठकः ।**
**चतुर्विप्रा न पूज्यन्ते वृहस्पतिसमा यदि ॥३८४॥**

भेडापालक, चित्रकार, वैद्य र घरघरमा तिथिनक्षत्र बताउने यि  चार ब्राह्मणलाई वृहस्पतिसमान भएपनि पूजा गर्दिन ।

**मागधो माथुरश्चैव कापटः कीटकानजौ ।**
**पञ्च विप्रा न पूज्यन्ते वृहस्पतिसमा यदि ॥३८५॥**

मागध, मथुरा, कर्पट, कीट र कान देश गरी पाँच देशमा जन्मने ब्राह्मण चाहे वृहस्पतिसमान नै किन नहुन् ती पूजिदैनन् ।

**क्रयक्रीता च य कन्या पत्नी सा न विधीयते ।**
**तस्यां जाताःसुतास्तेषां पितृपिण्डं न विद्यते ॥३८६॥**

मूल्य तिरेर विवाह गरिएकी कन्या (धनको लागि) पत्नी हुन्न र तिनले जन्माएको छोरोलाई पितृ-पिण्डदानको अधिकार छैन ।

**अष्टशल्यागतो नीरं पाणिना पिवते द्विजः ।**
**सुरापानेन तत्तुल्यं तुल्यं गोमांसभक्षणम् ॥३८७॥**

अष्टशलय (पुर, दरबार)को पानी हातले पिउने द्विजले सुरापान र गोमांस खाए समान हुन्छ ।

**ऊर्ध्वजंघेषु विप्रेषु प्रक्षाल्य चरणद्वयम् ।**
**तावच्चाण्डालरुपेण यावद्गङ्गां न मज्जति ॥३८८॥**

उभिएका ब्राह्मणको दुबै चरण धुने व्यक्ति गङ्गामा ननुहाएसम्म चाण्डालसरह हुन्छ ।

**दीपशय्यासनच्छाया कार्पासं दन्तधावनम् ।**
**अजाखुररजस्पृशं चैव शक्रस्यापि श्रियं हरेत् ॥३८९॥**

आफूमाथि पर्ने बत्ती, ओछ्यान र आसनको छाया, कपासको हाँगाले गरिने दन्तधावन तथा बोकाले उडाएको धूलोको स्पर्शले इन्द्रकै पनि लक्ष्मी नाशिन्छ ।

**गृहाद्दशगुणं कूपं कूपाद्दशगुणं तटम् ।**
**तटाद्दशगुणं नद्यां गङ्गासंख्या न विद्यते ॥३९०॥**

घरभन्दा कुवामा १० गुना, कुवाभन्दा नदीतीरमा १० गुना, तीरभन्दा नदीमा १० गुना र गङ्गामा नुहाएको पुण्य असंख्य हुन्छ ।

**स्रवद्यद्ब्राह्मणं तोयं रहस्यं क्षत्त्रियं तथा ।**
**वापीकूपे तु वैश्यस्य शौद्रं भाण्डोदकं तथा ॥३९१॥**

बगिरहेको जललाई ब्राह्मण, एकान्तको जललाई क्षत्रिय, कुवापँधेरोको जललाई वैश्य र भाँडाको जललाई शूद्र नाम दिइएको छ ।

**तीर्थस्नानं महादानं यच्चान्यत्तिलतर्पणम् ।**
**अब्दमेकं न कुर्वीत महागुरुनिपाततः ॥३९२॥**

पिताआदि महागुरुको मरणमा एक वर्षसम्म तीर्थस्नान, महादान र तिलले तर्पण नगर्नू । (अन्य अर्थ : जो पहाड माथिबाट मुक्तिका लागि लडेर मर्दछन् त्यसलाई महागुरुनिपातन वा भृगुपतन भनिन्छ) ।

**गङ्गा गया त्वमावस्या वृद्धिश्राद्धे क्षयेऽहनि ।**
**मघापिण्डप्रदानं स्यादन्यत्र परिवर्जयेत् ॥३९३॥**

गङ्गा र गयामा वृद्धिश्राद्ध र क्षयीश्राद्ध तथा मघा नक्षत्रमा पिण्डदान पिता आदि मरेको छ महिनामा गर्नू अन्त नगर्नू ।

**घृतं वा यदि वा तैलं पयो वा यदि वा दधि ।**
**चत्वारो ह्याज्यसंस्थानं हुतं नैव तु वर्ज्जयेत् ॥३९४॥**

घिउ, तेल, दूध र दहीले गरिने होम नत्याग्नू (घिउ नहुँदा यिनैले काम चलाउनू) ।

**श्रुत्वैतानृषयो धर्मान्भाषितानत्रिणा स्वयम् ।**
**इदमूचुर्महात्मानं सर्वे ते धर्मनिष्ठिताः ॥३९५॥**

अत्रि मुनिले बताएका यी धर्मका कुरा सुनी धर्मपरायण ऋषिहरूले महात्मा अत्रिसँग यसो भने ।

**य इदं धारयिष्यन्ति धर्मशास्त्रमंद्रिताः ।**
**इह लोके यशः प्राप्य ते यास्यन्ति त्रिविष्टपम् ॥३९६॥**

कि जो मानिस अल्छी नगरी यो धर्मशास्त्रलाई धारण गर्दछन् तिनले यो लोकमा यश पाई अन्तमा स्वर्ग जान्छन् ।

**विद्यार्थी लभते विद्यां धनकामो धनानि च ।**
**आयुष्कामस्तथैवायुः श्रीकामो महतीं श्रीयम् ॥३९७॥**

यसको पाठ गर्नाले विद्यार्थीले विद्या, धन चाहनेले धन, आयु चाहनेले दीर्घायु र सौन्दर्यश्री चाहनेले सौन्दर्यश्री प्राप्त गर्दछ ।

॥ इति श्रीमदत्रिसंहिताः समाप्ता ॥
॥ अत्रि ऋषिले लेखेको अत्रिसंहिताको मोहन प्रसाद सापकोटाद्वारा
गरिएको नेपाली भावानुवाद समाप्त भयो ॥



सबैको कल्याण होस् !